# युद्धबन्दीहरूसँग गरिने व्यवहार सम्बन्धी (तेस्रो) महासन्धि

# जेनेभा, १२ अगस्त १९४९

# (७ फेब्रुअरी १९६४ मा नेपालले अनुमोदन गरेको)

## प्रस्तावना

२७ जुलाई, १९२९ मा जेनेभामा सम्पन्न युद्धबन्दीहरूलाई गरिने व्यवहारसम्बन्धी महासन्धिलाई पुनरावलोकन गर्ने प्रयोजनका लागि अप्रिल २१ देखि १२ अगस्त, १९४९ सम्म जेनेभामा सम्पन्न कुटनीतिक सम्मेलनमा प्रतिनिधित्व गर्ने सरकारका पूर्ण अधिकारप्राप्त अधोहस्ताक्षरी प्रतिनिधिहरू देहायबमोजिम सहमत भएका छन् :-

## भाग १

## सामान्य प्रावधानहरू

### धारा १

उच्च संविदाकारी पक्षहरूले, जुनसुकै परिस्थितिमा यस महासन्धिको सम्मान गर्ने र गराउने बाचा गर्छन् ।

### धारा २

शान्तिको समयमा लागू गरिने प्रावधानहरूका अतिरिक्त, कुनै एक पक्षले युद्धको अवस्थालाई मान्यता नदिएको भए पनि प्रस्तुत महासन्धि दुई वा सो भन्दा बढी उच्च संविदाकारी पक्षहरूबीच हुने घोषित युद्ध वा सशस्द्त्र संभषएका सबै अवस्थाहरूमा लागू हुनेछ ।

प्रस्तुत महासन्धि कुनै उच्च संविदाकारी पक्षको भू-भागको आंशिक वा पूर्ण कब्जाका स्थितिहरूमा त्यस्तो कब्जा सशस्त्र प्रतिरोध विना भएको भए तापनि लागू हुनेछ ।

यद्यपी संघर्षमा शक्तिहरूमध्ये एक शक्ति प्रस्तुत महासन्धिको पक्ष नभएतापनि प्रस्तुत महासन्धिको पक्षधर रहेका शक्तिहरू आफ्ना पारस्परिक सम्बन्धमा यसबाट बाँधिने छन् । आफै, यदि महासन्धिको पक्षधर नभएको शक्तिले पनि यसका व्यवस्थाहरू स्वीकार गर्छ र लागू गर्छ भने सो शक्तिसँगको सम्बन्धमा पनि तिनीहरू यस महासन्धिबाट बाँधिने छन् ।

### धारा ३

कुनै एक उच्च संविदाकारी पक्षको भू-भागमा गैर अन्तर्राष्ट्रिय प्रकृतिको सशस्त्र संघर्षको हकमा संघर्षरत हरेक पक्ष न्यूनतम रुपमा देहायमा प्रावधानहरू लागू गर्न बाध्य हुनेछ :-

(१) शत्रुतापूर्ण कारवाहीमा सक्रिय रुपमा भाग नलिने सशस्त्र बलका आफ्ना हतियार बिसाएका र बिरामी, घाइते वा थुना वा अन्य त्यस्तै कारणले लड्न असक्षम, लड्न नसक्ने अवस्थामा पुगेका सैन्य दलका सदस्य लगायत लडाईमा सक्रिय सहभागी नरहेका व्यक्तिहरूलाई सबै परिस्थितिमा जाति, वर्ण, धर्म वा आस्था, लिङ्ग, जन्म वा धन सम्पत्ति वा अन्य त्यस्तै आधारमा, कुनै प्रतिकूल भेदभाव नगरी मानवोचित व्यवहार गरिनेछ ।

यसको निम्ति हरेक समयमा र हरेक स्थानमा माथि उल्लिखित व्यक्तिहरूको हकमा देहायका कार्यहरू निषेधित छन् र निषेधित रहनेछन् :-

(क) जीवन तथा शरीर विरुद्धको हिंसा, विशेष गरी सबै किसिमको हत्या, अंगभंग, क्रूर व्यवहार र यातना,

(ख) बन्धक बनाउने,

(ग) व्यक्तिगत प्रतिष्ठा उपर आक्रमण, विशेष गरी होच्याउने वा अपमानजनक व्यवहार गर्नु,

(घ) सभ्य समाजद्वारा अपरिहार्य भनी मान्यता प्राप्त सम्पूर्ण न्यायिक प्रत्याभूति प्रदान गर्दै नियमित प्रक्रियाद्वारा गठित अदालतको पूर्व फैसला विना सजाय तोक्ने र कार्यान्वयन गर्ने ।

(२) घाइते र बिरामीहरूलाई जम्मा गरिनेछ र तिनलाई हेरविचार गरिनेछ ।

रेडक्रसको अन्तर्राष्ट्रिय समिति जस्तो कुनै निष्पक्ष मानवीय संस्थाले संघर्षका पक्षहरूलाई आफ्नो सेवा उपलब्ध गराउन सक्नेछ ।

संघर्षका पक्षहरूले प्रस्तुत महासन्धिका सम्पूर्ण प्रावधानहरू वा केही प्रावधानहरूलाई विशेष सम्झौताहरूको माध्यमद्वारा लागू गराउन थप प्रयास समेत गर्नुपर्नेछ ।

उपर्युक्त प्रावधानहरू लागू भएको कारणले संघर्षका पक्षहरूको कानुनी हैसियतमा असर पर्नेछैन ।

## धारा ४

क. प्रस्तुत महासन्धिको हकमा युद्धबन्दी भनेको शत्रुको कब्जामा परेका देहायका कुनै वर्गीकरणमा पर्ने व्यक्तिहरू हुन् :-

(१) संघर्षरत पक्षको सशस्त्र बलका सदस्यहरूका साथै त्यस्ता सशस्त्र बलको भागको रुपमा रहेका नागरिक सेनाका सदस्यहरू वा स्वयंसेवक संगठनको दस्ताहरू ।

(२) संघर्षरत पक्षको भूभाग नै कब्जामा लिइएको भएपनि अधीनस्थ र आफ्नो भू-भाग भित्र वा बाहिर कार्यरत कुनै पक्षको संगठित प्रतिरोध अभियान, अन्य नागरिक सेनाका सदस्यहरू र अन्य स्वयंसेवक दस्ताका सदस्यहरू लगायत यदि यस्ता संगठित प्रतिरोध अभियान, नागरिक सेना वा स्वयंसेवक दस्ताहरूले देहायका शर्तहरू पूरा गरेमा :-

(क) आफ्ना मातहतका सहायकहरूका लागि जिम्मेवार व्यक्तिबाट निर्देशित भएको,

(ख) टाढैबाट चिन्न सकिने निश्चित स्पष्ट चिन्ह प्रयोग गरेको,

(ग) हातहतियार खुल्ला रुपमा बोकेर हिँडेका,

(घ) सैन्य कारवाहीको सञ्चालन युद्धसम्बन्धी कानुन र प्रथा बमोजिम चलेको ।

(३) थुनामा राख्ने शक्तिद्वारा मान्यता नदिइएको अधिकारी वा सरकार प्रति निष्ठा राख्ने नियमित सशस्त्र सेनाका सदस्यहरू ।

(४) सशस्त्र सेनाका सदस्यहरू नभए तापनि उनीहरूसँग रहने व्यक्तिहरू, जस्तै सैन्य हवाइजहाजको चालकदलका गैरसैनिक सदस्यहरू, युद्ध सम्वाददाताहरू, आपूर्ति गर्ने ठेकेदारहरू, सशस्त्र बलको कल्याणका निमित्त जिम्मेवार श्रमिक इकाई वा सेवाका सदस्यहरू तर तिनीहरूले आफू संलग्न हुने सशस्त्र बलबाट अख्तियारी प्राप्त गरेको हुनु पर्नेछ जसले  निजबाट त्यस प्रयोजनका लागि अनुसूचीको नमुना अनुसारको परिचय पत्र प्रदान गर्नेछ,

(५) संघर्षरत पक्षका व्यापारिक पानी जहाजका मुख्य चालक, चालक मार्गदर्शक र प्रशिक्षार्थीहरू समेतका चालकदलका सदस्यहरू र नागरिक वायुयानका चालक दलका सदस्यहरू, जसले अन्तर्राष्ट्रिय कानुनको अन्य कुनै प्रावधान अन्तर्गत बढी सुविधाजनक व्यवहारद्वारा लाभ प्राप्त गर्दैनन् ।

(६) नियमित सशस्त्र इकाईको रुपमा संगठित हुन समय प्राप्त नभए पनि शत्रु आइपुग्नासाथ आक्रामक शक्तिको प्रतिरोधको लागि स्वःस्फूर्त रुपमा हतियार उठाउने कब्जा नगरिएका भ-भागका बासिन्दाहरू, यदि तिनीहरूले खुला रुपमा हतियार बोकेका छन् र युद्धसम्बन्धी कानुन र प्रथाहरूको पालना गर्दछन् भने ।

ख. प्रस्तुत महासन्धि अन्तर्गत निम्न व्यक्तिहरूलाई समेत युद्धबन्दी सरहको व्यवहार गरिनेछ :-

(१) कब्जा गरेको क्षेत्रभन्दा बाहिर शत्रुतापूर्ण कारबाही भइरहेको बेला तिनीहरूलाई शुरुमै मुक्त गरिएको भए तापनि विशेष गरी, यदि त्यस्ता व्यक्तिहरूले लडाइँमा क्रियाशिल रहेको आफ्नो सशस्त्र बलमा पुनः सामेल हुन असफल प्रयास गरेका छन्, अथवा नजरबन्द वा थुनाको निमित्त तिनीहरूको नाममा जारी म्याद बुझ्न तिनीहरू असफल भएका छन् भने उल्लिखित कारणहरूको आधारमा यदि कब्जा गर्ने शक्तिले नजरबन्दमा राख्न आवश्यक ठानिएका, कब्जा गरिएको राष्ट्रको सशस्त्र बलसँग सम्बन्धित भएका वा भइरहेका व्यक्तिहरू,

(२) तटस्थ वा गैर-युद्धरत शक्तिद्वारा आफ्ना क्षेत्रमा प्राप्त गरिएका यस धारामा व्यवस्थित श्रेणीमधये कुनै श्रेणी अन्तर्गत पर्ने व्यक्तिहरू जसलाई ती शक्तिहरूले अन्तर्राष्ट्रिय कानुन अन्तर्गत नजरबन्दमा राख्न आवश्यक ठानेका हुन्छन् । धाराहरू ८, १०, १५, ३० को पाँचौ प्रकरण, ५८, ६७, ९२, १२६ संघर्षका पक्षहरू र तटस्थ वा गैर-युद्धरत शक्तिका बीच कायम रहेको कुटनैतिक सम्बन्धमा भएका र संरक्षक शक्तिसँग सम्बन्धित ती धाराहरूमा गरिएका व्यवस्था जहाँ यस्ता कूटनैतिक सम्बन्धहरू स्थापित छन् भने ती व्यक्तिहरू आश्रित रहेको पक्षहरूलाई यस महासन्धिमा उल्लेख भए बमोजिम तिनीहरूप्रति संरक्षक शक्तिका कार्यहरू सम्पादन गर्नको लागि अनुमति दिइनेछ र यी पक्षहरूले साधारणतया कूटनैतिक तथा वाणिज्य दूतको प्रथा, परम्परा र सन्धिअनुकूल हुने गरी कुनै पूर्वाग्रह नराखी कार्यहरू गर्नेछन् ।

ग. धारा ३३ मा व्यवस्था भए अनुसारका चिकित्सा कर्मचारी र धार्मिक पूजारीहरूको हैसियतमा, यस धाराले कुनै पनि तरीकाले असर पार्ने छैन ।

## धारा ५

धारा ४ मा उल्लिखित व्यक्तिहरूको सम्बन्धमा तिनीहरू शत्रुको कब्जामा परेदेखि तिनीहरूको अन्तिम रिहाई र स्वदेश प्रत्यावर्तन नभएसम्म प्रस्तुत महासन्धि लागू हुनेछ ।

कुनै आक्रमक काम गरेको र शत्रुको हातमा परेका मानिसहरू धारा ४ मा व्यवस्थित कुनै श्रेणी भित्र पर्छन् वा पर्दैनन भन्नेबारे शङ्का उठेमा, सक्षम न्यायाधीकरणद्वारा तिनीहरूको हैसियत निर्धारण नभएसम्म, त्यस्ता सबै व्यक्तिले प्रस्तुत महासन्धिको संरक्षणको उपभोग गर्न पाउनेछन् ।

## धारा ६

धाराहरू १०, २३, २८, ३३, ६०, ६५, ६६, ६७, ७२, ७३, ७५, १०९, ११०, ११८, १२९, १२२ र १३२ मा स्पष्ट रुपमा उल्लेख गरिएका सम्झौताहरूका अतिरिक्त उच्च संविदाकारी पक्षहरूले, तिनीहरूले छुट्टै प्रावधान बनाउन उपयुक्त ठानेमा सबै विषयमा विशेष सम्झौताहरू सम्पन्न गर्न सक्नेछन् । कुनै पनि विशेष सम्झौताले प्रस्तुत महासन्धिले व्यवस्था गरेको युद्धबन्दीहरूको परिस्थितिलाई न त प्रतिकूल प्रभाव पार्नेछ न यसले तिनीहरूलाई प्रदान गरेको अधिकारहरूलाई सीमित पार्नेछ ।

माथि उल्लेखित वा अनुगामी सम्झौताहरूमा विपरीत व्यवस्थाहरू भएकोमा बाहेक, वा संघर्षका एक वा अर्को पक्षद्वारा तिनीहरूसँग सम्बन्धित बढी सुविधाजनक उपायहरू गरिएकोमा बाहेक प्रस्तुत महासन्धि लागू भइरहेसम्म युद्धबन्दीहरू यस प्रकारका सम्झौताहरूबाट लाभान्वित भइरहने छन् ।

## धारा ७

युद्धबन्दीहरूले प्रस्तुत महासन्धिद्वारा संरक्षित अधिकारहरू पूर्ण वा आंशिक रुपमा कुनै पनि परिस्थितिमा परित्याग गर्ने छैनन् र यदि पूर्ववर्ती धारामा विशेष उल्लिखित सम्झौतामा व्यवस्था रहेछ भने पनि त्यस्तो परित्याग हुन सक्दैनन् ।

## धारा ८

प्रस्तुत महासन्धि संघर्षरत पक्षको हितको रक्षा गर्ने कर्तव्य निहित रहेको संरक्षक शक्तिको सहयोग र निजको निगरानी अन्तर्गत लागू गरिनेछ । यस प्रयोजनको लागि संरक्षक शक्तिले तिनीहरूको कूटनीतिक वा वाणिज्यदूत कर्मचारी बाहेक, तिनीहरूका आफ्नै नागरिकहरू वा अन्य तटस्थ शक्तिका नागरिकहरूमध्येबाट दूत नियुक्त गर्न सक्नेछन् । त्यस्ता दूतको लागि तिनीहरूले जुन शक्तिसँग काम गर्नुपर्नेछ, सो शक्तिको अनुमति लिनुपर्नेछ ।

संघर्षरत पक्षहरूले संरक्षक शक्तिका प्रतिनिधि वा दूतहरूको कार्यमा सम्भव भएसम्म अत्याधिक सहायता पुऱ्याउनेछन् ।

संरक्षक शक्तिहरूका प्रतिनिधि वा दूतहरूले कुनै पनि हालतमा तिनीहरूको निहित उद्देश्यको परिधिभन्दा पर जानु हुँदैन । विशेषगरी तिनीहरूले आफ्नो कर्तव्य निर्वाह गरिरहेको राष्ट्रको सुरक्षाको लागि नभई नहुने आवश्यकताहरूको ख्याल राख्ने छन् ।

## धारा ९

युद्धबन्दीहरूको सुरक्षा र तिनीहरूको सहायताका निमित्त संघर्षरत पक्षको सहमति लिई, रेडक्रसको अन्तर्राष्ट्रिय समिति वा अन्य कुनै निष्पक्ष मानवीय संगठनले सञ्चालन गर्ने मानवीय गतिविधिमा, प्रस्तुत महासन्धिको प्रावधानले अवरोध खडा गर्ने छैन ।

## धारा १०

उच्च संविदाकारी पक्षहरूले प्रस्तुत महासन्धि अनुसार कुनै पनि समय संरक्षक शक्तिहरूमा निहित कर्तव्यहरू, निष्पक्षता र दक्षताको पूर्ण प्रत्याभूति दिने कुनै संगठनलाई सुम्पन सहमत हुन सक्नेछन् ।

माथि, पहिलो अनुच्छेदमा व्यवस्थित कुनै संरक्षक शक्ति वा संगठनको क्रियाकलापद्वारा, जुनसुकै कारणले नै किन नहोस्, युद्धबन्दीहरूले फाइदा प्राप्त गर्दैनन् वा फाइदा पाउन छाड्छन् भने संघर्षका पक्षहरूद्वारा तोकिएको संरक्षक शक्तिले, प्रस्तुत महासन्धि अन्तरगत सम्पादन गर्ने कार्यहरू ग्रहण गर्नका लागि, थुनामा राख्ने कुनै शक्तिले कुनै तटस्थ राष्ट्र वा यस्तै प्रकरणका संगठनलाई अनुरोध गर्नेछ ।

यदि सुरक्षाको व्यवस्था तोकेअनुसार गर्न सकिदैन भने, यस धाराको अधीन रही थुनामा राख्ने शक्तिले प्रस्तुत महासन्धि अन्तरगत संरक्षक शक्तिले गर्नुपर्ने मानवीय कार्यहरू गर्न रेडक्रसको अन्तर्राष्ट्रिय समिति जस्ता कुनै मानवीय संगठनलाई सेवाहरूको निमित्त अनुरोध गर्न अथवा सेवाहरू स्वीकार गर्न सक्नेछ ।

कुनै पनि तटस्थ शक्ति वा कुनै संगठन जसलाई सम्बन्धित शक्तिद्वारा आमन्त्रित गरिएको होस् वा यी उद्देश्यका निमित्त जसले आफूलाई प्रस्तुत गरेको होस्, यस महासन्धिद्वारा संरक्षित व्यक्ति आश्रित रहने संघर्षरत पक्षप्रति उत्तरदायित्वपूर्ण भाव राखी कार्य गर्नु आवश्यक हुनेछ र साथै उपर्युक्त कार्यहरूको जिम्मेवारी लिन र ती कार्यहरू निष्पक्षताकासाथ सम्पन्न गर्न सक्ने अवस्थामा रहेको छ भनी पर्याप्त आश्वासन दिनु पनि जरुरी हुनेछ ।

शक्तिहरू बीच सम्पन्न विशेष सम्झौताद्वारा माथि उल्लिखित प्रावधानहरूलाई न्यून गर्न पाइने छैन, यदि ती मध्ये एउटा शक्तिको, सैनिक कारवाहीको कारणले विशेष गरेर, उक्त शक्तिको भू-भागको सम्पूर्ण वा ठूलो भाग कब्जामा परेकोले, अर्को शक्ति वा निजको गठबन्धन सहयोगीसँग वार्ता गर्ने स्वतन्त्रता, अस्थायी रुपमै भए पनि सीमित गरिएको छ भने ।

प्रस्तुत महासन्धिमा जहिलेसुकै संरक्षक शक्तिको उल्लेख गर्दा त्यस्तो उल्लेख, प्रस्तुत धाराको अर्थमा प्रतिस्थापन गर्ने संगठनको हकमा पनि लागू हुनेछ ।

## धारा ११

संरक्षित व्यक्तिको हितमा उचित ठानेको अवस्थामा, विशेषगरी प्रस्तुत महासन्धिको प्रयोग वा व्याख्याको सन्दर्भमा संघर्षरत पक्षहरू बीच मतभिन्नता सृजना भएमा, संरक्षक शक्तिहरूले मतभिन्नता समाधान गर्ने दृष्टिकोणले आफ्नो असल प्रभाव (Good Offices) प्रयोग गर्नेछन् ।

यस प्रयोजनका लागि प्रत्येक संरक्षक शक्तिले, कि त कुनै एक पक्षको आमन्त्रणमा वा आफ्नै पहलमा, संघर्षका पक्षहरूलाई तिनीहरूको प्रतिनिधिहरूको, विशेष गरी युद्धबन्दीहरूका लागि उत्तरदायी अधिकारीहरूको, सम्भवतः उपयुक्त ठानिएको तटस्थ क्षेत्रमा भेला बोलाउन प्रस्ताव गर्न सक्नेछ । यस उद्देश्यका लागि आफूहरू समक्ष प्रस्ताव आएपछि संघर्षरत पक्षहरू त्यसलाई लागू गर्न बाध्य हुनेछन् । यदि आवश्यक भएमा संरक्षक शक्तिहरूले कुनै तटस्थ शक्तिको कुनै व्यक्तिलाई वा रेडक्रसको अन्तर्राष्ट्रिय समितिद्वारा प्रतिनिधिको रुपमा खटाइएको कुनै व्यक्तिलाई संघर्षरत पक्षहरूको स्वीकृतिको लागि प्रस्ताव गर्न सक्छन्, जसलाई यस्तो बैठकमा भाग लिन आमन्त्रित गरिनेछ ।

## भाग २
## युद्धबन्दीहरूको साधारण सुरक्षा
## धारा १२

युद्धबन्दीहरू शत्रुशक्तिको हातमा परेका हुन् तर तिनीहरूलाई पक्राउ गर्ने व्यक्तिहरू वा सैनिक टुकडीहरूको हातमा परेका होइनन् । व्यक्तिगत उत्तरदायी हुनसक्ने कुरालाई वास्ता नगरी थुनामा राख्ने शक्ति तिनीहरूलाई गरिने व्यवहारको लागि उत्तरदायी छ ।

युद्धबन्दीलाई केवल थुनामा राख्ने शक्तिद्वारा महासन्धिको पक्ष रहेको कुनै शक्तिसमक्ष हस्तान्तरण गरिनेछ र यस्तो हस्तान्तरण जो समक्ष हस्तान्तरण गरिने हो, उक्त शक्ति यो महासन्धि लागू गर्न इच्छुक र सक्षम छ भन्ने कुरामा थुनामा राख्ने शक्ति सन्तुष्ट भएपछि मात्र गरिनेछ । यस्तो परिस्थितिमा युद्ध बन्दीहरूलाई हस्तान्तरण गरेपछि, तिनीहरू थुनामा बस्दा महासन्धि लागू गर्ने उत्तरदायित्व युद्धबन्दीलाई स्वीकार (ग्रहण) गर्ने शक्तिमा निर्भर रहन्छ ।

तथापि यदि त्यस्तो शक्तिले कुनै महत्वपूर्ण सन्दर्भमा महासन्धिका प्रावधानहरूको पालना गर्न असफल हुन्छ भने, यस सम्बन्धमा संरक्षक शक्तिद्वारा युद्धबन्दीहरूलाई हस्तान्तरण गर्ने शक्तिलाई सूचना दिएपछि निजले अवस्थालाई सच्याउन प्रभावकारी उपायहरू गर्नेछ वा युद्धबन्दीहरूको फिर्ताको लागि अनुरोध गर्नेछ । त्यस्तो अनुरोधको पालना हुनुपर्दछ ।

## धारा १३

युद्धबन्दीहरूलाई जुनसुकै स्थितिमा पनि मानवीय व्यवहार गर्नु पर्नेछ । थुनामा राख्ने शक्तिद्वारा आफ्नो हिरासतमा रहेको कुनै युद्धबन्दीको मृत्यु हुने वा निजको स्वास्थ्यमा गम्भीर खतरा पुऱ्याउने जस्ता कुनै गैर कानुनी कार्य गर्न वा गर्नुपर्ने कार्य नगर्न प्रतिबन्धित गरिएको छ र त्यस्ता कार्यलाई प्रस्तुत महासन्धिको गम्भीर उल्लंघनको रुपमा लिइनेछ । विशेष रुपमा कुनै पनि युद्धबन्दीलाई शारीरिक अंगभंग वा कुनै पनि प्रकारको चिकित्सकीय वा वैज्ञानिक परीक्षणको विषय बनाइने छैन जुन कार्य सम्बन्धित युद्धबन्दीको चिकित्सा, दन्तचिकित्सा वा अस्पतालको उपचारबाट उचित सावित गर्न सकिँदैन र निजको हित अनुकूल सञ्चालित हुन सक्दैन ।

त्यसैगरी, युद्धबन्दीहरूलाई जुनसुकै स्थितिमा पनि खासगरी हिंसा वा धम्की र अपमान र सार्वजनिक कौतुहलता विरुद्धका कार्यहरूबाट सुरक्षा प्रदान गरिनु पर्दछ ।

युद्धबन्दीहरू विरुद्ध प्रतिशोधका कदमहरू प्रतिबन्धित गरिएका छन् ।

## धारा १४

युद्धबन्दीहरू सबै परिस्थितिमा तिनीहरूको जीउ र प्रतिष्ठाले पाउने सम्मानका हकदार हुनेछन् ।

महिलाहरूले आफ्नो लिंगका कारणले पाउनु पर्ने सबै आदरपूर्ण व्यवहार पाउने छन् र सबै अवस्थामा पुरुषले पाए सरहको सुविधा पाउने छन् ।

युद्धबन्दीहरूले आफू गिरफ्तार भएको बेलामा उपभोग गर्ने गरेका पूर्ण नागरिक हैसियत कायम रहनेछन् । थुनामा राख्ने शक्तिले कैदमा बस्दाको अवस्थामा आवश्यक परेकोमा बाहेक, आफ्नै भू-भाग वा आफ्नो भू-भागबाट बाहिर, नागरिक हैसियतले प्राप्त गरेका अधिकारहरूको प्रयोगलाई सीमित गर्न सक्नेछैन ।

## धारा १५

युद्धबन्दीहरूलाई थुनामा राख्ने शक्तिहरूले तिनीहरूको संरक्षण र तिनीहरूको स्वास्थ्य स्थितिले आवश्यक ठानिएको स्वास्थ्योपचार निःशुल्क गर्न बाध्य हुनेछन् ।

## धारा १६

दर्जा र लिंगसम्बन्धी प्रस्तुत महासन्धिका प्रावधानहरूलाई र स्वास्थ्य अवस्था, उमेर वा पेशागत योग्यताहरूको आधारमा तिनीहरूलाई दिइने कुनै सुविधायुक्त व्यवहारलाई ध्यानमा राखेर थुनामा राख्ने शक्तिले जाति, राष्ट्रियता, धार्मिक विश्वास वा राजनीतिक आस्था वा त्यस्तै अन्य कुनै आधारमा भेदभाव नगरी सबै युद्धबन्दीहरूलाई समान व्यवहार गर्नेछ ।

# भाग ३

# बन्दी-अवस्था

## खण्ड १

## बन्दी अवस्थाको सुरुआत

### धारा १७

हरेक युद्धबन्दी, उसको बारेमा प्रश्न गरिंदा आफ्नो थर, पहिलो नाम र पद, जन्म मिति र सैनिक, गण, व्यक्तिगत वा क्रम संख्या बताउन अथवा सो बताउन नजानेमा, त्यस्तै समान जानकारीहरू मात्र दिन बाध्य छ।

यदि उसले जानीजानी यो नियम उल्लंघन गर्छ भने, उसले आफ्नो पद वा हैसियत अनुसार पाउने सुविधाहरूबाट बंचित भएमा स्वयं जिम्मेवार रहनेछ।

संघर्षका प्रत्येक पक्षले आफ्नो अधिकार अन्तर्गत रहेका युद्धबन्दी बन्न सक्ने व्यक्तिहरूलाई आफ्नो नाम, पहिलो नाम, दर्जा, सैनिक, गण, व्यक्तिगत वा क्रम संख्या वा समान जानकारी र जन्ममिति देखिने परिचयपत्र उपलब्ध गराउनु जरुरी हुन्छ । उक्त परिचयपत्रमा, बाहकको हस्ताक्षर वा औठा छाप वा दुबै अंकित हुनुपर्छ र संघर्षरत पक्षले आफ्नो सशस्त्र फौजसँग सम्बन्धित व्यक्तिहरूबारे अन्य जानकारी थप्न चाहेमा सो समेत समावेश गर्न सक्तछ । सम्भव भएसम्म उक्त परिचयपत्र ६.५×१० से.मी. को हुनुपर्छ र प्रतिलिपि समेत जारी भएको हुनुपर्छ । माँग भएको अवस्थामा उक्त परिचयपत्र युद्धबन्दीले देखाउने छ तर कुनै हालतमा पनि उसँग बाट खोसिने छैन ।

कुनै पनि प्रकारको जानकारी प्राप्त गर्ने उद्देश्यले युद्धबन्दीमाथि न त कुनै शारीरिक वा मानसिक यातना, न अन्य कुनै प्रकारको करकाप नै गर्न सकिनेछ । उत्तर दिन इन्कार गर्ने युद्धबन्दीलाई धम्की दिने, अपमान गर्ने वा कुनै प्रकारको दुःखदायी वा बेफाइदा हुने व्यवहार गरिने छैन ।

शारीरिक वा मानसिक अवस्थाका कारण आफ्नो परिचय बताउन नसक्ने युद्धबन्दीलाई चिकित्सा सेवालाई हस्तान्तरण गरिनेछ।

अगाडिको प्रकरणका प्रावधानहरूको अधीन रही यस्ता बन्दीहरूको पहिचान सम्पूर्ण सम्भाव्य तरीकाद्वारा स्थापित गरिनेछ। युद्धबन्दीहरूले बुझ्ने भाषामा निजहरूसँग सोधपुछ गरिनेछ।

## धारा १८

हातहतियार, घोडाहरू, सैन्य उपकरणहरू र सैन्य लिखतहरू बाहेक सम्पूर्ण व्यक्तिगत सम्पत्ति र व्यक्तिगत प्रयोगका वस्तुहरू युद्धबन्दीहरूको अधीनमा रहनेछन् त्यसैगरी तिनीहरूको धातुको हेलमेट र ग्यास मास्क र व्यक्तिगत सुरक्षाका निमित्त प्रदत्त वस्तुहरू समेत उनीहरूकै साथमा रहनेछन् । त्यस्ता सामान र वस्तुहरू, जुन तिनीहरूको नियमित सैनिक उपकरणसँग सम्बन्धित भए तापनि तिनीहरूको पहिरन वा खानपिनको निमित्त प्रयोग हुने समान वा वस्तुहरू, तिनीहरूकै साथमा रहनेछन् ।

युद्धबन्दीहरू कुनै पनि समयमा परिचयको लिखत बिना रहनु हुँदैन । परिचय जनाउने कागजात नभएका युद्धबन्दीहरूलाई, बन्दी बनाउने शक्तिले यस्ता कागजातहरू उपलब्ध गराउनेछ ।

युद्धबन्दीहरूबाट पद र राष्ट्रियताको व्याज, अलंकरणहरू र सर्वोपरी व्यक्तिगत अथवा भावनात्मक महत्व राख्ने वस्तुहरू खोस्न सकिने छैन ।

युद्धबन्दीका साथमा रहेका रुपैया पैसा कुनै अधिकृतको आदेश विना र एउटा विशेष दर्ता किताबमा त्यस्तो रकम र धनीको विवरण लेखिसकेपछि र हरेक वस्तु उल्लेख गरी भरपाई दिएर र भरपाई बनाई त्यसमा सजिलै पढ्न सकिने गरी जारी गर्ने व्यक्तिको नाम, पद र इकाइ उल्लेख गरी भरपाई दिएको स्थितिमा बाहेक निजको रकम खोसिने छैन ।

बन्दी बनाउने शक्तिको मुद्रामा रहेको रकम वा युद्धबन्दीको अनुरोधमा सटही भएको त्यस्तो मुद्राको रकम, धारा ६४ मा व्यवस्था भएअनुसार बन्दीको खातामा राखी दिनुपर्दछ ।

बन्दी बनाउने शक्तिले सुरक्षाको कारणले मात्र युद्धबन्दीबाट निजको मूल्यवान वस्तु लिन सक्तछ तर त्यस्ता वस्तुहरू लिँदा माथि उल्लिखित रुपैयाँ पैसा लिंदा पूरा गर्नुपर्ने कार्यविधि लागू हुनेछ ।

त्यस्ता वस्तुहरू, बन्दी बनाउने शक्तिको मुद्रा बाहेक धनीले सटहीको निमित्त अनुरोध नगरिएको अन्य मुद्रामा रहेका रुपैयाँ पैसा सबै बन्दी बनाउने शक्तिले बुझी लिएमा सो निजकै अधीन रहनेछन् र युद्धबन्दीको कैदको समाप्ति पछि पूर्वरुपमै फिर्ता गरिनेछन् ।

## धारा १९

पक्राउ पछि युद्धबन्दीहरूलाई खतराबाट जोगाउन यथासम्भव छिटो, युद्ध क्षेत्रभन्दा टाढा रहेको शिविरमा सार्नु पर्दछ ।

ती युद्धबन्दीहरूलाई मात्रै जसलाई, घाइते र बिरामी भएको कारणले, तिनीहरू रहेको ठाउँबाट अन्यत्र सार्दा झनै बढी खतरा हुने भएमा मात्र कुनै खतरापूर्ण क्षेत्रमा अस्थायी रुपमा राख्न सकिन्छ ।

युद्धबन्दीहरूलाई युद्धक्षेत्रबाट अन्यत्र सार्नका निमित्त प्रतिक्षा गरिरहँदा अनावश्यक खतरामा पर्ने स्थितिमा राख्नु हुँदैन ।

## धारा २०

युद्धबन्दीहरूलाई अन्यत्र सार्ने कार्य सदैव मानवीय तरिकाले गरिने छ र बन्दी बनाउने शक्तिको फौजलाई, एक ठाउँबाट अर्को ठाउँमा सार्दाको अवस्थाहरू जस्तै अवस्थामा सारिनेछ ।

बन्दी बनाउने शक्तिले युद्धबन्दीलाई अन्यत्र सार्दा पर्याप्त मात्रामा खाना, पेय पानी, आवश्यक लत्ताकपडा र औषधीमूलो समेतको आपूर्ति गर्नेछ । बन्दी बनाउने शक्तिले ठाउँ सार्दाको बखत तिनीहरूको सुरक्षाको निमित्त सम्पूर्ण सतर्कता सुनिश्चित गर्नेछ र अन्यत्र सारिएका युद्धबन्दीहरूको सूची जतिसक्दो चाँडो तयार गर्नेछ ।

यदि युद्धबन्दीहरूलाई अन्यत्र सार्दा बाटोमा पर्ने शिविरहरू भएर जानु पर्ने भए, तिनीहरूको त्यस शिविरको बसाइ सम्भव भएसम्म छोटो हुनेछ ।

## खण्ड २

## युद्धबन्दीहरूको सीमाबद्धता

## परिच्छेद १

## सामान्य टिप्पणीहरू

## धारा २१

बन्दी बनाउने शक्तिले युद्धबन्दीहरूलाई सीमाबन्धनमा राख्न सक्नेछ । तिनीहरूलाई थुनिएको शिविरको निश्चित सीमाभन्दा पर शिविर छाडेर नजान अथवा शिविरमा छेकबार लगाइएको छ भने यसको सीमाभन्दा बाहिर नजाने दायित्व तिनीहरूमाथि यसले लागू गर्न सक्छ । दण्डात्मक र अनुशासनात्मक कारबाहीसँग सम्बन्धित प्रस्तुत महासन्धिका प्रावधानहरूको अधीन रही उनीहरूको स्वास्थ्यको सुरक्षाको लागि आवश्यक भएकोमा तथा यस्तो थुनालाई आवश्यक बनाउने परिस्थितिको निरन्तरता रहिरहेको अवधिमा बाहेक, युद्धबन्दीहरूलाई बन्द थुनामा राख्न सकिने छैन ।

तिनीहरू आश्रित रहेको शक्तिको कानुनले अनुमति दिएको हदसम्म युद्धबन्दीहरूलाई सशर्त प्रतिज्ञा वा कबुलियतमा आंशिक अथवा पूर्ण रुपमा मुक्त गर्न सकिनेछ । यस्ता कदम खास गरी त्यस्तो अवस्थामा चालिने छन्, जहाँ यसले उनीहरूको स्वास्थ्य स्थितिको सुधारमा योगदान गर्न सक्छ । कुनै पनि युद्धबन्दीलाई सशर्त प्रतिज्ञा अथवा कबुल अन्तरगत स्वतन्त्रता स्वीकार गर्न बाध्य गरिने छैन ।

युद्ध आरम्भ भैसकेपछि संघर्षको हरेक पक्षले अर्को पक्षलाई सशर्त प्रतिज्ञा अथवा कबुल अन्तरगत स्वतन्त्रता स्वीकार गर्न आफ्ना नागरिकहरूलाई अनुमति प्रदान गर्ने अथवा बन्देज लगाउने कानुन र नियमहरू बारे सूचित गर्नेछ । यसरी सूचित गरिएका कानुन र नियमअनुरुप सशर्त प्रतिज्ञा अथवा कबुलियत गरी छाडिएका युद्धबन्दीहरूले आफ्नै व्यक्तिगत सम्मानका लागि उनीहरू जसमाथि आश्रित छन्, सो शक्ति र उनीहरूलाई थुनामा राख्ने शक्ति - यी दुबैप्रति मुखजमानी र कबुलियतका बचनबद्धतालाई नैतिकतापूर्वक पूरा गर्नुपर्छ । यस्तो परिस्थितिमा उनीहरू जसमाथि आश्रित छन्, सो शक्तिले सशर्त प्रतिज्ञा अथवा गरिएको कबुलियतसँग मेल नखाने कुनै पनि सेवा उनीहरूबाट न त प्राप्त गर्न, न त स्वीकार गर्न बाध्य छ ।

## धारा २२

युद्धबन्दीहरूलाई जमिनमाथि रहेका र सरसफाई एवं स्वस्थताको हरेक प्रत्याभूति भएका परिसरमा मात्र थुनामा राख्न सकिनेछ । युद्धबन्दीको आफ्नै हितको कारणले उचित ठहऱ्याएको खास परिस्थितिमा बाहेक तिनीहरूलाई सुधारक कारागारमा थुन्न पाइनेछैन ।

अस्वस्थकर क्षेत्रमा अथवा हावापानी हानिकारक भएको क्षेत्रमा थुनिएका युद्धबन्दीहरूलाई, यथाशिघ्र बढी उपयुक्त हावापानी भएको क्षेत्रमा सारिनेछ ।

थुनामा राख्ने शक्तिले तिनीहरूको राष्ट्रियता, भाषा र रीतिरिवाजको आधारमा युद्धबन्दीहरूलाई शिविर अथवा शिविरका हातामा जम्मा गर्नेछ तर तिनीहरूले मञ्जुर गरेमा बाहेक समातिएको बेलामा तिनीहरू सेवारत रहेको सैनिक दलका युद्धबन्दीहरूबाट तिनीहरूलाई छुट्याइनेछैन ।

## धारा २३

कुनै पनि युद्धबन्दीहरूलाई कुनै पनि समयमा त्यस्तो क्षेत्रमा पठाउनु वा थुन्न हुँदैन, जहाँ ऊ युद्धग्रस्त क्षेत्रको गोलाबारीमा पर्न सक्छ न त उसको उपस्थितिलाई कुनै खास स्थान अथवा क्षेत्रलाई, सैनिक कारवाहीबाट मुक्त पार्नका लागि नै प्रयोग गर्न सकिन्छ ।

सर्वसाधारण जनतालाई उपलब्ध भएको हदसम्म युद्धबन्दीहरूलाई पनि आकाशबाट गरिने बमबारी अथवा युद्धका अन्य खतराहरूका विरुद्ध सुरक्षित आश्रय स्थल प्राप्त हुनेछ । माथि उल्लिखित

खतराहरूका विरुद्ध आवास क्षेत्रको सुरक्षाका लागि खटिएका मानिसहरू बाहेक सबै युद्धबन्दीहरू खतराको सूचना पाउनासाथ यथाशिघ्र यस्ता आश्रयस्थलभित्र प्रवेश गर्न सक्नेछन् । सर्वसाधारण जनताको सुरक्षाको लागि चालिने कुनै पनि अन्य सुरक्षात्मक कदम उनीहरूको हकमा पनि लागू हुनेछ ।

थुनामा राख्ने शक्तिले, मध्यस्थ संरक्षक शक्तिमार्फत सम्बन्धित शक्तिहरूलाई युद्धबन्दीहरूको शिविर रहेको भौगोलिक स्थलका सम्बन्धमा सबै उपयोगी जानकारी दिनेछ ।

सैनिक दृष्टिकोणले अनुमति दिएको खण्डमा युद्धबन्दी शिविरहरूमा दिनमा आकाशबाट स्पष्ट देख्न सकिने गरी राखिएको पी.डब्लु वा पी.जी. भन्ने अक्षरहरूका संकेत राखिनेछन् । सम्बन्धित पक्षहरू अन्य कुनै चिन्ह लगाउने सांकेतिक तरिकाबारे पनि सहमत हुन सक्छन् । यस्तो चिन्ह युद्धबन्दीहरूको शिविरमा मात्र राख्न सकिनेछ ।

## धारा २४

स्थायी प्रकृतिका, बाटोमा पर्ने पारगमन अथवा छानविन शिविरहरू, प्रस्तुत खण्डमा वर्णित अवस्थाहरू अनुकूल सुसज्जित हुनेछन् र ती शिविरका बन्दीहरूलाई अरु शिविरमा रहेकालाई जस्तै व्यवहार गरिनेछ ।

## परिच्छेद २

## युद्धबन्दीहरूका आवास, खाना र लुगा

## धारा २५

युद्धबन्दीहरूलाई सोही क्षेत्रमा बासस्थान भएका बन्दी बनाउने शक्तिको सैन्यहरूले पाए सरहको अवस्था (सुविधा) भएमा आवासहरूमा राखिनेछ । उल्लिखित स्थितिले बन्दीहरूको बानी र चाल-चलनमा सुविधा पुऱ्याउनेछ र कुनै पनि अवस्थामा तिनीहरूको स्वास्थ्यका लागि त्यो हानिकारक हुनेछैन ।

माथिका प्रावधानहरू खास गरी युद्धबन्दीहरूको शयनकक्षहरू, त्यसले ओगटेको क्षेत्र, न्यूनतम घन क्षेत्र तथा सामान्य जडान, ओछ्यान र कम्बलको सम्बन्धमा लागू हुनेछन् ।

व्यक्तिगत या सामूहिक प्रयोगका लागि युद्धबन्दीहरूलाई उपलब्ध गराइएका भवन पूर्ण रुपमा चिस्यानबाट सुरक्षित र खास गरी साँझदेखि रातभर पर्याप्त मात्रामा ताप र प्रकाशको व्यवस्था गरिएको हुनुपर्छ । आगलागीको खतराका विरुद्ध सबै किसिमको सावधानी लिएको हुनुपर्छ ।

महिला तथा पुरुष युद्धबन्दीहरूलाई सँगै राखिएको शिविरमा महिलाहरूलाई छुट्टै सुत्ने कोठाहरू उपलब्ध गराइनेछ ।

## धारा २६

युद्धबन्दीहरूको असल स्वास्थ्य बनाई राख्न, तौल घट्न नदिन अथवा कुपोषण सम्बन्धी कमीहरू विकसित हुन नदिन आधारभूत दैनिक खानाको रसद पर्याप्त परिमाण, गुण र विविधतायुक्त हुनेछ । बन्दीहरूको खानाको बानीलाई पनि ध्यानमा राखिनेछ ।

बन्दी बनाउने शक्तिले काम गर्ने बन्दीहरूलाई तिनीहरूलाई गर्न लगाइएको कामको लागि आवश्यक पर्ने थप रसद आपूर्ति गर्नेछ ।

युद्धबन्दीहरूलाई पर्याप्त पेय पानी आपूर्ति गरिनेछ । सूर्तिजन्य वस्तुको प्रयोगको लागि अनुमति दिइनेछ ।

युद्धबन्दीहरूलाई यथासम्भव आफ्नो खाना तयार पार्ने काममा संलग्न गराइनेछ । यस प्रयोजनका लागि तिनीहरूलाई भान्सामा खटाउन सकिनेछ । यसका अतिरिक्त तिनीहरूको साथमा रहेको थप खाना आफै तयार पार्न साधन उपलब्ध गराइनेछ ।

भोजनालय सञ्चालन गर्न पर्याप्त घरजग्गा उपलब्ध गराइनेछ ।

खानामा असर पार्ने, सामूहिक अनुशासनात्मक कारवाहीहरूलाई निषेध गरिएको छ ।

## धारा २७

बन्दी बनाउने शक्तिले युद्धबन्दीहरूलाई पर्याप्त मात्रामा लुगा, भित्री लुगा र जुत्ता उपलब्ध गराउनेछ । र यसो गर्दा उसले युद्धबन्दीहरूलाई थुनामा राखिएको क्षेत्रको हावापानीअनुरुप गर्नेछ । बन्दी बनाउने शक्तिद्वारा कब्जा गरिएको शत्रु सैनिक बलका उर्दीपोशाक, यदि हावापानीका लागि उपयुक्त छन् भने, युद्धबन्दीहरूलाई लगाउनको लागि उपलब्ध गराउनुपर्छ ।

माथिका वस्तुहरूको नियमित आपूर्ति र सम्भारको व्यवस्था, बन्दी बनाउने शक्तिले सुनिश्चित गर्नेछ । यसका अतिरिक्त, काम गर्ने युद्धबन्दीहरूले तिनीहरूको कामको प्रकृतिले माग गरेअनुसार उपयुक्त लुगा पाउनेछन् ।

## धारा २८

सबै शिविरहरूमा चमेनागृह स्थापित गरिनेछन् जहाँ युद्धबन्दीहरूले खाद्य सामग्री, साबुन, सुर्ती र दैनिक प्रयोगमा आउने अरु सामान्य वस्तु किन्न सक्नेछन् । यिनको मूल्य स्थानीय बजार मूल्यभन्दा कहिल्यै पनि बढी हुनेछैन ।

शिविरमा चमेनागृहबाट प्राप्त भएको नाफाको प्रयोग युद्धबन्दीहरूको भलाईको लागि गरिनेछ । यस प्रयोजनको लागि विशेष कोषको स्थापना गरिनेछ । युद्धबन्दीहरूको प्रतिनिधिलाई चमेनागृह तथा यस कोषको व्यवस्थापनमा सहयोग गर्ने अधिकार हुनेछ ।

जब कुनै शिविर बन्द गरिन्छ, उक्त कोषमा योगदान गर्ने व्यक्तिहरूको जुन राष्ट्रियता हो, त्यही राष्ट्रियता भएका युद्धबन्दीहरूको फाइदाको लागि प्रयोग गर्ने गरी विशेष कोषमा बाँकी रहेको रकम, कुनै अन्तर्राष्ट्रिय कल्याणकारी संस्थालाई हस्तान्तरण गरिनेछ । सामूहिक स्वदेश फिर्ती भएमा, सम्बन्धित शक्तिहरूबीच प्रतिकूल सम्झौता भएको स्थितिमा बाहेक बन्दी बनाउने शक्तिले यस्तो नाफा रकम राख्नेछ ।

## परिच्छेद ३
## सरसफाई र स्वास्थ्यसम्बन्धी हेरचाह

## धारा २९

बन्दी बनाउने शक्ति शिविरको सरसफाई र स्वस्थ वातावरण सुनिश्चित गर्न र महामारीको रोकथाम गर्न आवश्यक सरसफाईका सबै उपायहरू गर्न बाध्य हुनेछ ।

युद्धबन्दीहरूलाई आफ्नो प्रयोगका निमित्त रातदिन सरसफाइका नियमहरू अनुरुपको शौचालय जस्ता सुविधाहरू उपलब्ध हुनेछन् र ती निरन्तर रुपमा सफा अवस्थामा राखिनेछन् । महिला युद्धबन्दीहरूका लागि पनि आवासको व्यवस्था गरिएको ठाउँमा तिनीहरूका लागि छुट्टै शौचालय उपलब्ध गराइनेछ ।

शिविरमा उपलब्ध गराइएका स्नानागारका अतिरिक्त, युद्धबन्दीहरूलाई उनीहरूको आफ्नो निजी शौचालयका लागि र निजी लुगा धुनका लागि पर्याप्त मात्रामा पानी र साबुन उपलब्ध गराइनेछ, त्यस प्रयोजनका लागि तिनीहरूलाई आवश्यक जडान, सुविधा र समय प्रदान गरिनेछ ।

## धारा ३०

हरेक शिविरमा पर्याप्त उपचार कोठाहरू हुनेछन्, जहाँ युद्धबन्दीहरूले आवश्कयताअनुसारको ध्यान र उपयुक्त आहार पाउनेछन् । आवश्यक भएमा सरुवा रोग वा मानसिक बिरामीको लागि पृथक वार्ड तयार गरिनेछ ।

निकट भविष्यमा नै उनीहरूलाई स्वदेश फिर्ता गरिने भए पनि गम्भीर रोगबाट पीडित युद्धबन्दीहरू अथवा जसको अवस्थाले गर्दा विशेष सेवा, शल्यक्रिया वा अस्पतालबाट हेरचाह आवश्यक पर्छ, तिनलाई उपचार हुन सक्ने सैनिक अथवा नागरिक स्वास्थ्यसम्बन्धी एकाइमा भर्ना गर्नुपर्छ । स्वदेश फिर्ता नभएसम्म अपाङ्गहरू, विशेषतः अन्धाहरूको हेरचाह गर्न र उनीहरूको पुनर्स्थापनाका लागि, विशेष सुविधा उपलब्ध गराइनेछ ।

युद्धबन्दीहरू जुन शक्तिमाथि आश्रित छन् त्यस शक्तिका स्वास्थ्यकर्मीबाट प्राथमिकतापूर्वक र, सम्भव भएमा आफ्नै देशका स्वास्यकर्मीबाट उनीहरूलाई हेरचाह प्राप्त हुनेछ ।

युद्धबन्दीहरूलाई परीक्षणका लागि स्वास्थ्य अधिकृतहरू समक्ष आफैं प्रस्तुत हुनबाट रोक्न सकिने छैन । बन्दी बनाउने अधिकृतहरूले, उपचार गराउने बन्दीको अनुरोधमा त्यस्तो हरेक युद्धबन्दीलाई उसको बिरामी अथवा चोटपटकको प्रकृति र उपलब्ध गराइएको उपचारको अवधि र प्रकृतिबारे जनाइएको आधिकारिक प्रमाणपत्र दिनुपर्छ । यस्तो प्रमाणपत्र प्रतिलिपि केन्द्रीय युद्धबन्दी निकायमा पठाइनेछ ।

युद्धबन्दीहरूको असल स्वास्थ्य कायम गर्न चाहिने जुनसुकै उपकरण, खास गरी, कृत्रिम दाँत र अन्य कृत्रिम उपकरणहरू र चश्मा लगायतका उपचारको खर्च, बन्दी बनाउने शक्तिले व्यहोर्नेछ ।

## धारा ३१

युद्धबन्दीहरूको स्वास्थ्य परीक्षण कम्तिमा महिनामा एकपटक गरिनेछ । यसभित्र हरेक युद्धबन्दीको परीक्षण र तौलको विवरण राख्ने काम पनि गर्नुपर्नेछ । यिनको उद्देश्य खास गरी बन्दीहरूको स्वास्थ्य, पौष्टिक आहार र सरसफाइको सामान्य अवस्थाको सुपरीवेक्षण गर्नु र विशेष गरी क्षयरोग, औलो र यौन रोगजस्ता संक्रामक रोग पत्ता लगाउनु हुनेछ । यस प्रयोजनका लागि उपलब्ध सबैभन्दा दक्ष तरीकाको प्रयोग गरिनेछ, उदाहरणका लागि क्षयरोग छिट्टै पत्ता लगाउन समयसमयमा गरिने आम लघु एक्सरे (मास मिनिएचर रेडियोग्राफी)

## धारा ३२

आफ्नो सैन्य दलको स्वास्थ्य सेवासँग सम्बद्ध नभए तापनि चिकित्सक, शल्य चिकित्सक, दन्त चिकित्सक, उपचारिका वा स्वास्थ्य सम्बन्धी अर्दलीका रुपमा रहेका युद्धबन्दीहरूलाई बन्दी बनाउने शक्तिले, उनीहरूको स्वास्थ्य सेवालाई उही शक्तिमाथि आश्रित रहेका युद्धबन्दीहरूको हितको लागि लगाउन सक्छ । यस्तो अवस्थामा उनीहरू युद्धबन्दी नै रहिरहे पनि बन्दी बनाउने शक्तिद्वारा राखिएका समान प्रकृतिका स्वास्थ्यकर्मीले पाएसरहको व्यवहार पाउनेछन् । उनीहरूलाई धारा ४९ अन्तर्गत अरु कुनै काम गर्नबाट उन्मुक्ति प्रदान गरिनेछ ।

## परिच्छेद ४

## युद्धबन्दीहरूका लागि राखिएका स्वास्थ्यकर्मी र पुरोहितहरू

## धारा ३३

युद्धबन्दीहरूलाई सहयोग गर्ने उद्देश्यले बन्दी बनाउने शक्तिद्वारा रोकेर राखिएका स्वास्थ्य सेवाका सदस्यहरू र धार्मिक पुजारीलाई युद्धबन्दीको रुपमा लिइनेछैन । तर पनि उनीहरूले कम्तिमा पनि महासन्धिमा व्यवस्था भएबमोजिम संरक्षण र फाइदा प्राप्त गर्नेछन् र युद्धबन्दीहरूलाई स्वास्थ्य सेवा र धार्मिक सहयोग र सेवा प्रदान गर्न आवश्यक सबै सुविधा पनि उपलब्ध गराइनेछ ।

उनीहरूले आफ्नो व्यावसायिक आचरण अनुरुप बन्दी बनाउने शक्तिको सैनिक कानुन र नियमको परिधिभित्र तथा यसको सक्षम सेवाको नियन्त्रणअन्तर्गत आफू आश्रित सैनिक बललाई प्राथमिकता दिएर सोहीसँग सम्बन्धित युद्धबन्दीहरूको हितको निम्ति आफ्ना स्वास्थ्य र अध्यात्मसम्बन्धी कार्य जारी राख्नेछन् । आफ्ना स्वास्थ्य र अध्यात्मसम्बन्धी कार्यहरू गर्न उनीहरूले देहायमा लेखिएबमोजिमका सुविधाबाट समेत लाभ लिनेछन् :-

(क) शिविरभन्दा बाहिर काम गर्ने ठाउँमा अथवा अस्पतालमा रहेका युद्धबन्दीहरूलाई समयसमयमा भेट्न उनीहरूलाई अख्तियारी दिइनेछ । यस प्रयोजनका लागि बन्दी बनाउने शक्तिले उनीहरूलाई आवश्यक पर्ने यातायातको साधन उपलब्ध गराउनेछ ।

(ख) हरेक शिविरका वरिष्ठ मेडिकल अधिकृत त्यहाँ राखिएका स्वास्थ्यकर्मीका गतिविधिसँग सम्बन्धित हरेक कुराका लागि शिविरका सैनिक अधिकारीहरूप्रति जिम्मेवार रहनेछ । यस प्रयोजनका लागि संघर्षरत पक्षहरूले, संघर्ष प्रारम्भ भएपछि युद्धभूमिमा घाइते तथा बिरामी सैनिक बलको अवस्थाको सुधार सम्बन्धी १२ अगस्त १९४९ को जेनेभा महासन्धिको धारा २६ मा उल्लिखित संस्थाहरू लगायतका स्वास्थ्यकर्मीहरूको एक समान दर्जासम्बन्धी विषयमा सहमत हुनेछन् । यो, वरिष्ठ मेडिकल अधिकृतका साथै धार्मिक

पुजारीहरू आफ्नो कर्तव्यसँग सम्बन्धित सबै प्रश्नहरूमा शिविरका सक्षम अधिकारीहरूसँग काम कारवाही गर्ने अधिकार हुनेछ । यस्ता अधिकारीहरूले यी प्रश्नहरूसँग सम्बन्धित पत्रव्यवहारका लागि आवश्यक सम्पूर्ण सुविधा उनीहरूलाई उपलब्ध गराउनेछन् ।

(ग) उनीहरूलाई जुन शिविरमा राखिएको छ, त्यस शिविरको आन्तरिक अनुशासनको पालना उनीहरूले गर्नुपर्ने भए तापनि यस्ता व्यक्तिहरूलाई उनीहरूको आफ्नो स्वास्थ्य वा धार्मिक सेवासँग सम्बन्धित विषयबाहेकका अरु कुनै पनि काम गर्न बाध्य पार्न सकिनेछैन ।

संघर्षको समयमा संघर्षरत पक्षहरूले रोकेर राखिएका कर्मचारीहरूको सम्भावित उद्धारका सम्बन्धमा सहमत हुनेछन् र पालना गर्नुपर्ने प्रक्रिया निर्धारण गर्नेछन् ।

अगाडिका कुनै पनि प्रावधानले बन्दी बनाउने शक्तिलाई स्वास्थ्य र आध्यात्मिक दृष्टिकोणबाट युद्धबन्दीहरूप्रतिको निजको दायित्वबाट मुक्त गर्नेछैन ।

## परिच्छेद ५

## धार्मिक, बौद्धिक र शारीरिक गतिविधिहरू

### धारा ३४

सैनिक अधिकारीहरूद्वारा तोकिएको अनुशासनात्मक कार्य तालिका पालन गर्ने शर्तमा, आफ्ना आस्था अनुसारको सेवामा उपस्थित हुने लगायतका धार्मिक कर्तव्यहरूको पालन गर्ने कार्यमा, युद्धबन्दीहरूले पूर्ण स्वतन्त्रताको उपभोग गर्न पाउनेछन् ।

धार्मिक सेवाको आयोजना गर्न पर्याप्त भवनहरू उपलब्ध गराइनेछन् ।

### धारा ३५

शत्रु शक्तिको हातमा परेका र युद्धबन्दीहरूलाई सहयोग गर्ने उद्देश्यले रहेका वा राखिएका पुजारीलाई, समान धर्मका युद्धबन्दीहरूका बीचमा तिनीहरूको धार्मिक सद्विवेक अनुरुप स्वतन्त्रतापूर्वक धार्मिक सेवा संचालन गर्न र उनीहरूको धार्मिक हेरचाह गर्न अनुमति दिइनेछ । उनीहरूलाई एउटै सैनिक दलका, एउटै भाषा बोल्ने र एउटै धर्म मान्ने युद्धबन्दीहरू भएका धेरै शिविरहरू र श्रम शिविरहरूमा खटाइनेछ । तिनीहरूलाई आफ्ना शिविरदेखि बाहिर रहेका युद्धबन्दी भेट्न, धारा ३३ मा उल्लेख भएबमोजिम यातायातका साधन लगायत आवश्यक सुविधा प्राप्त हुनेछ । बन्दी बनाइएको मुलुकका र अन्तर्राष्ट्रिय धार्मिक संगठनहरूमा धार्मिक अधिकारीहरूसँग धार्मिक कर्तव्यहरूसँग सम्बन्धित विषयहरूमा पूर्व नियन्त्रणको अधीन रही,

पत्रव्यवहार गर्न उनीहरू स्वतन्त्र हुनेछन् । यस प्रयोजनका लागि उनीहरूले पठाउन सक्ने चिट्ठी र कार्डहरू धारा ७१ मा उल्लेख भएको कोटाको अतिरिक्त हुनेछन् ।

## धारा ३६

आफ्नै सैनिक दलमा पुजारीको रुपमा काम नगरेका तर धर्माधिकारी भएका युद्धबन्दीहरू जुनसुकै सम्प्रदायका भए पनि आफ्नो समुदायका सदस्यहरू बीचमा, धार्मिक कार्य गर्न स्वतन्त्र हुनेछन् । यस प्रयोजनका लागि बन्दी बनाउने शक्तिद्वारा राखिएका पुरोहितहरूले जुन व्यवहार पाउँछन्, यिनीहरूले पनि त्यही व्यवहार पाउनेछन् । उनीहरू यसबाहेक अरु काम गर्न बाध्य हुनेछैनन् ।

## धारा ३७

युद्धबन्दीहरूलाई राखिएका कुनै पुजारी वा तिनीहरूकै धर्मको युद्धबन्दी धर्माधिकारीको सहायतमा उपलब्ध नभएको खण्डमा धार्मिक दृष्टिकोणबाट सम्भव भएमा युद्धबन्दीहरूको वा समान सम्प्रदायको धर्माधिकारी वा उसको अनुपस्थितिमा, कुनै योग्य सामान्य व्यक्तिलाई सम्बन्धित बन्दीहरूको अनुरोधमा यस पदको पूर्ति गर्न नियुक्त गरिनेछ । बन्दीहरू बनाउने शक्तिले अनुमोदन गरेमा सम्बन्धित बन्दीहरूको समुदायको सहमतिमा र आवश्यक भएमा उही धर्मका स्थानीय धार्मिक अधिकारीहरूको अनुमोदनमा यस्तो नियुक्ति लागु हुनेछ । यसरी नियुक्त व्यक्तिले अनुशासन र सैनिक सुरक्षाको हितमा, बन्दी बनाउने शक्तिद्वारा स्थापित सबै नियमहरूको पालन गर्नेछ ।

## धारा ३८

प्रत्येक बन्दीको व्यक्तिगत चाहनालाई सम्मान गर्दै बन्दी बनाउने शक्तिले बन्दीहरूका बीचमा बौद्धिक, शैक्षिक र मनोरञ्जनात्मक कामहरू र खेलकूदहरूलाई प्रोत्साहित गर्नेछ तथा उनीहरूलाई पर्याप्त भवन र आवश्यक उपकरण उपलब्ध गराएर, उनीहरूलाई व्यायामको अवसर सुनिश्चित गर्न आवश्यक उपायहरू गर्नेछ ।

युद्धबन्दीहरूलाई खेलकूद लगायत शारीरिक व्यायाम गर्ने र घरबाहिर घुमफिर गर्ने अवसर प्राप्त हुनेछ । यस प्रयोजनका लागि सबै शिविरहरूमा पर्याप्त खुला ठाउँ उपलब्ध गराइनेछ ।

## परिच्छेद ६

## अनुशासन

### धारा ३९

हरेक युद्धबन्दी शिविरलाई, बन्दी बनाउने शक्तिको नियमित सैन्य बलको आधिकारिक दर्जा पाएको अधिकृतको प्रत्यक्ष अख्तियारी अन्तर्गत राखिनेछ । यस्तो अधिकृतले आफूसँग प्रस्तुत महासन्धिको एकप्रति राख्नेछ । शिविरका सबै कर्मचारी र पालेलाई यसका प्रावधानहरू थाहा हुने कुरा उसले सुनिश्चित गर्नेछ र आफ्नो सरकारको निर्देशनमा यसको कार्यान्वयनको लागि, ऊ जिम्मेवार हुनेछ ।

अधिकृतबाहेक सबै युद्धबन्दीहरूले उनीहरूको आफ्नै सैन्य बलमा लागू भएको नियम बमोजिम बन्दी बनाउने शक्तिका सबै अधिकृतहरूलाई सलाम गर्नुपर्छ र सम्मानको बाह्य चिन्ह प्रदर्शन गर्नुपर्छ ।

अधिकृत युद्धबन्दीहरू बन्दी बनाउने शक्तिका माथिल्लो दर्जाका अधिकृतहरूलाई मात्र सलाम गर्न बाध्य हुन्छन् तर उनीहरूले जुनसुकै दर्जाको भए पनि शिविरको समादेशक (कमान्ड्डर) लाई भने सलाम गर्नैपर्छ ।

### धारा ४०

दर्जा र राष्ट्रियताको ब्याजको साथसाथै मान पदक लगाउने कामलाई अनुमति प्रदान गरिनेछ ।

### धारा ४१

हरेक शिविरमा प्रस्तुत महासन्धिको पाठ र यसका अनुसूचीहरू तथा धारा ६ मा लेखिएबमोजिम कुनै विशेष सम्झौताको विषयवस्तु बन्दीहरूको आफ्नै भाषामा उनीहरू सबैले पढ्न सक्ने ठाउँमा टाँसिनेछ । टाँसिएको प्रतिमा पहुँच नहुने बन्दीहरूलाई, तिनीहरूको अनुरोधमा प्रतिलिपिहरू उपलब्ध गराइनेछ ।

नियम, आदेश, सूचना र युद्धबन्दीहरूको आचरणसँग सम्बन्धित हरेक प्रकारको प्रकाशन उनीहरूले बुझ्ने भाषमा उनीहरूलाई उपलब्ध गराइनेछ । यस्ता नियम, आदेश र प्रकाशन, माथि वर्णन गरिएको तरीका बमोजिम टाँसिनेछन् र तिनको प्रतिलिपि बन्दीहरूको प्रतिनिधिलाई दिइनेछ । यसरी नै हरेक युद्धबन्दीहरूलाई व्यक्तिगत रुपमा सम्बोधन गरिएका हरेक आज्ञा र आदेश उनीहरूले बुझ्ने भाषामा दिइनेछ ।

## धारा ४२

युद्धबन्दीहरूका विरुद्ध, खास गरी भागिरहेका र भाग्ने उद्योग गरिरहेका युद्धबन्दीहरूका विरुद्ध, हतियारको प्रयोगलाई अन्तिम उपायको रुपमा लिइनेछ जसको प्रयोग गर्नुभन्दा पहिले सदैव परिस्थिति अनुरुपको चेतावनी दिइनेछ ।

## परिच्छेद ७

## युद्धबन्दीहरूको दर्जा

## धारा ४३

संघर्ष प्रारम्भ हुँदा संघर्षरत पक्षहरूले समान दर्जाका बन्दीहरूको बीचमा समान व्यवहार सुनिशिचत गर्न, प्रस्तुत महासन्धिको धारा ४ मा उल्लेख भएका सबै व्यक्तिहरूको पद र दर्जा एक अर्कालाई सूचित गर्नेछन् । पछि सृजना गरिएका पद र दर्जाबारे पनि यसरी नै जानकारी दिनुपर्नेछ ।

बन्दीहरू जुन शक्तिमाथि आश्रित छन् त्यस शक्तिद्वारा युद्धबन्दीहरूलाई प्रदान गरिएको र विधिपूर्वक सूचना गरिएको दर्जाको पदोन्नतिलाई, बन्दी बनाउने शक्तिले मान्यता प्रदान गर्नेछ ।

## धारा ४४

समान तहका अधिकृत र बन्दीहरूसँग उनीहरूको दर्जा र उमेर अनुरुप उपयुक्त आदरसहित व्यवहार गरिनेछ ।

अधिकृतहरूका शिविरहरूमा सेवा सुनिश्चित गर्न सम्भव भएसम्म, उही भाषा बोल्ने, उही सैन्य दलका अरु दर्जालाई पर्याप्त मात्रामा खटाइनेछ र यसो गर्दा अधिकृतहरूको र समान तहका बन्दीहरूको दर्जालाई ध्यानमा राखिनेछ । यस्ता आदेशपालकहरू (अर्दली) ले यसबाहेक अरु कुनै काम गर्नुपर्दैन ।

अधिकृतहरूद्वारा सामूहिक भोजनालयको सुपरिवेक्षण गर्ने कार्यलाई हरेक किसिमबाट सहयोग पुऱ्याइनेछ ।

## धारा ४५

अधिकृतहरू र समान दर्जा भएका बन्दीहरू बाहेक अन्य युद्धबन्दीहरूप्रति उनीहरूको दर्जा र उमेर अनुरुप उपयुक्त आदरसहित व्यवहार गरिनेछ ।

युद्धबन्दीहरूद्वारा सामूहिक भोजनालयको सुपरिवेक्षण गर्ने कार्यलाई हरेक किसिमबाट सहयोग पुऱ्याइनेछ ।

## परिच्छेद ८

## शिविरमा आइसकेपछि युद्धबन्दीहरूको स्थानान्तरण

### धारा ४६

बन्दीहरूलाई स्थानान्तरण गर्ने निर्णय गर्दा, बन्दी बनाउने शक्तिले बन्दीहरूको हितलाई विशेष गरी उनीहरूलाई स्वदेश फर्काउने काममा कठिनाई नबढोस् भन्ने कुरामा ध्यान दिइनेछ ।

युद्धबन्दीहरूको स्थानान्तरण सधै मानवीय तरिकाले गरिनेछ र बन्दी बनाउने शक्तिका सैन्य बललाई स्थानान्तरण गर्दा उपलब्ध गराइने भन्दा कम सुविधाजनक अवस्था हुनेछैन । युद्धबन्दीहरू अभ्यस्त रहेको हावापानीको अवस्थालाई ध्यानमा राखिनेछ र स्थानान्तरणको अवस्था, कुनै पनि हालतमा उनीहरूको स्वास्थ्यका लागि हानिकारक/प्रतिकूल हुनेछैन ।

बन्दी बनाउने शक्तिले स्थानान्तरणको अवधिमा, युद्धबन्दीहरूलाई राम्ररी स्वस्थ राख्न उनीहरूलाई पर्याप्त खाना र खानेपानी र त्यसरी नै लुगा, आवास र स्वास्थ्य सेवा उपलब्ध गराउनेछ । बन्दी बनाउने शक्तिले हस्तान्तरणको समयमा, खास गरी समुद्री जहाज र विमानद्वारा उनीहरूलाई अन्यत्र लैजाँदा, उनीहरूको सुरक्षा सुनिश्चित गर्नका लागि पर्याप्त सावधानी लिनेछ र उनीहरू प्रस्थान गर्नुभन्दा पहिले स्थानान्तरण गरिएका सबै बन्दीहरूको पूर्ण सूची तयार पार्नेछ ।

### धारा ४७

बिरामी वा घाइते युद्धबन्दीहरूलाई उनीहरूको सुरक्षाले अत्यावश्यक रुपमा माग गरेमा बाहेक यात्राको कारणबाट तिनीहरू निको हुनमा खतरा पुग्ने भएमा तिनीहरूलाई स्थानान्तरण गरिनेछैन ।

यदि युद्ध क्षेत्र शिविर नजिकै आइपुग्यो भने त्यस शिविरका युद्धबन्दीहरूलाई उनीहरूको स्थानान्तरणमा पर्याप्त सुरक्षाको अवस्था नभएसम्म वा स्थानान्तरण गर्नुभन्दा त्यही ठाउँमा रहँदा अझ ठूलो जोखिम आई पर्न सक्ने स्थिति नभएसम्म, स्थानान्तरण गरिने छैन ।

### धारा ४८

स्थानान्तरण गर्दा युद्धबन्दीहरूलाई उनीहरूको प्रस्थान र उनीहरूको नयाँ हुलाकी ठेगानाको जानकारी आधिकारिक रुपमा दिइनेछ । यस्तो जानकारी उनीहरूलाई समयमा नै दिइनेछ, जसले गर्दा उनीहरूले आफ्नो सामान पोका पार्न र आफ्नो नजिकको नातेदारलाई जानकारी दिन सक्नेछन् ।

उनीहरूलाई आफ्नो निजी सामान तथा उनीहरूलाई प्राप्त भएका चिट्ठीपत्र र पार्सल आफूसँग लैजान अनुमति प्रदान गरिनेछ । यदि स्थानान्तरणको अवस्थाले आवश्यक ठहऱ्याएमा हरेक बन्दीले लग्न सक्ने मालसामानको वजनको सीमा तोक्न सकिनेछ । तर, यो कुनै पनि हालतमा प्रतिव्यक्ति पच्चीस किलोग्राम भन्दा बढी हुनेछैन ।

पहिलेको शिविरको ठेगानामा, उनीहरूको नाममा आएका चिट्ठी र पार्सल विलम्ब उनीहरूकहाँ पठाइनेछ । यस धाराको दोस्रो प्रकरणमा उल्लिखित नियन्त्रणको परिणामस्वरुप उनीहरूले आफूसँग लैजान नसकेको सामान र बन्दीहरूको सामुदायिक सम्पत्तिको ढुवानी सुनिश्चित गर्न, शिविरको समादेशकले (कमाण्डर) बन्दीहरूका प्रतिनिधिको सहमतिमा आवश्यक कुनै पनि कदम चाल्नेछ । ढुवानी खर्च बन्दी बनाउने शक्तिले व्यहोर्नेछ ।

## खण्ड ३

## युद्धबन्दीहरूको श्रम

## धारा ४९

बन्दी बनाउने शक्तिले युद्धबन्दीहरूको उमेर, लिङ्ग, दर्जा र शारीरिक अभिरुचिलाई ध्यानमा राखी र विशेष गरी, उनीहरूको शारीरिक र मानसिक स्वास्थ्यलाई असल अवस्थामा कायम राख्ने उद्देश्यले शारीरिक रुपमा सक्षम युद्धबन्दीहरूको श्रमलाई उपयोगमा ल्याउन सक्नेछ ।

आधिकारिक दर्जा नपाएका युद्धबन्दीहरूले केवल सुपरिवेक्षणको काम गर्ने छन् । यसो गर्न आवश्यक नपर्ने अरुहरूले अन्य कुनै उपयुक्त काम माग्न सक्नेछन् जुन सम्भव भएसम्म उनीहरूका लागि खोजिनेछ ।

यदि अधिकृत वा समान तहका व्यक्तिहरूले उपयुक्त काम मागे भने सम्भव भएसम्म सो काम उनीहरूका लागि खोजिनेछ तर उनीहरूलाई कुनै पनि परिस्थितिमा काम गर्न बाध्य पारिनेछैन ।

## धारा ५०

शिविर प्रशासन, जडान र मरम्मतका अतिरिक्त, देहायमा उल्लिखित वर्गहरूमा पर्ने कामहरू मात्र गर्न युद्धबन्दीहरू बाध्य हुने सक्नेछन् :-

(क) कृषि,

(ख) कच्चा पदार्थको उत्पादन वा दोहनसँग सम्बन्धित उद्योग र धातुसम्बन्धी, यान्त्रिक र रसायनसम्बन्धी कारखाना बाहेकका उत्पादनकर्ता उद्योगहरू, सैनिक प्रकृति वा प्रयोजन नभएका सार्वजनिक काम र भवन निर्माण सम्बन्धी कामहरू,

(ग) सैनिक प्रकृति वा प्रयोजन नभएका यातायात र गोदामको सञ्चालन,

(घ) व्यापारिक कारोबार र कला तथा हस्तकला,

(ङ) घरेलु सेवा,

(च) सैनिक प्रकृति वा प्रयोजन नभएका सार्वजनिक उपयोगिता सम्बन्धी सेवा

माथिका प्रावधानहरूको उल्लंघन भएको खण्डमा युद्धबन्दीहरूले धारा ७८ बमोजिम उजूर गर्ने आफ्नो अधिकारको प्रयोग गर्न अनुमति पाउनेछन् ।

## धारा ५१

युद्धबन्दीहरूलाई उपयुक्त काम गर्ने अवस्था प्रदान गर्नैपर्छ । खास गरी आवास, खाना, लुगा र उपकरणका सम्बन्धमा, यस्तो अवस्था बन्दी बनाउने शक्तिले उस्तै काममा लगाएका आफ्ना नागरिकहरूले पाएभन्दा कम स्तरको हुनेछैन । हावापानीको अवस्थाप्रति पनि ध्यान दिइनेछ ।

बन्दी बनाउने शक्तिले युद्धबन्दीहरूको श्रमलाई उपयोग गर्दा बन्दीहरूलाई काममा लगाइएको क्षेत्रमा श्रम सुरक्षासम्बन्धी, अझ विशेष गरेर श्रमिकहरूको सुरक्षासम्बन्धी राष्ट्रिय कानुन, विधिवत् लागू छ भन्ने कुरा सुनिश्चित गर्नेछ ।

युद्धबन्दीहरूले तालिम प्राप्त गर्नेछन् । र, उनीहरूले गर्नुपर्ने कामका लागि उपयुक्त र बन्दी बनाउने शक्तिका नागरिकहरूलाई उपलब्ध गराएजस्तै, सुरक्षाका साधन, उनीहरूलाई पनि उपलब्ध गराइनेछ । धारा ५२ को प्रावधान अन्तर्गत रही सर्वसाधारण श्रमिकहरूले गर्नुपर्ने सामान्य खतराको सामना, बन्दीहरूले पनि गर्नुपर्ने हुनसक्छ ।

श्रमका शर्तहरूलाई अनुशासनात्मक कारबाहीद्वारा, कुनै पनि हालतमा कडा पारिने छैन ।

## धारा ५२

स्वेच्छाले गर्न चाहेमा बाहेक कुनै पनि बन्दीलाई त्यस्तो काममा लगाइने छैन, जुन काम अस्वस्थकर अथवा खतरनाक प्रकृतिको छ ।

बन्दी बनाउने शक्तिको आफ्नै सैन्य दलका सदस्यका लागि अपमानजनक भनी ठानिएको काममा, कुनै पनि युद्धबन्दीलाई लगाउन पाइनेछैन ।

जमिनमुनिको विस्फोटक पदार्थ अथवा यस्तै उपकरण हटाउने कामलाई खतरनाक कामको रुपमा लिइनेछ ।

## धारा ५३

जान र आउनका लागि यात्राको समयलाई समेत समावेश गरी प्रत्येक दिन युद्धबन्दीले गर्ने श्रमको समय अवधि अत्याधिक हुनुहुँदैन र त्यस क्षेत्रका बन्दी बनाउने शक्तिका नागरिकहरू र उस्तै काममा लगाइएका सर्वसाधारण श्रमिकहरूको लागि अनुमति प्राप्त अवधिभन्दा, कुनै पनि हालतमा बढी हुनुहुँदैन ।

युद्धबन्दीहरूलाई दिनको कामको मध्य भागमा कम्तीमा एक घण्टाको विश्रामको अनुमति दिनुपर्छ । बन्दी बनाउने शक्तिका श्रमिकहरूले यदि लामो अवधिको विश्राम पाउने भए, सोही बमोजिम यो विश्रामको अवधि हुनेछ । यसका अतिरिक्त उनीहरूले हरेक हप्ता लगातार चौबीस घण्टाको विश्राम, प्राथमिकतापूर्व आइतबारका दिन अथवा उनीहरूको आफ्नो मुलुकमा विश्राम हुने दिनमा पाउनेछन् । यस बाहेक एकवर्ष काम गरेको बन्दीले लगातार आठ दिनको तलबीबिदा पाउनेछन् ।

यदि कामको तरीका, टुक्राटुक्रा काममा लगाइएको जस्तो रहेछ भने, त्यसको कारणबाट काम गर्ने समयको अवधि बढी पार्न सकिनेछैन ।

## धारा ५४

युद्धबन्दीहरूलाई काम गरे बापत दिने वेतन यस महासन्धिको धारा ६२ को प्रावधान बमोजिम निर्धारण गरिनेछ ।

कामका क्रममा दुर्घटनामा परेमा अथवा यस सिलसिलामा अथवा कामको परिणामस्वरुप रोग लागेमा, युद्धबन्दीहरूले उनीहरूको अवस्थाले आवश्यक ठहऱ्याए बमोजिम सबै हेरचाह प्राप्त गर्नेछन् । यसका अतिरिक्त बन्दी बनाउने शक्तिले यस्ता युद्धबन्दीहरूलाई उनीहरूले आफू आश्रित रहेको शक्तिमा आफ्नो दाबी पेश गर्न सक्षम हुने गरी चिकित्सा प्रमाणपत्र दिनेछ । र, यसको प्रतिलिपि धारा १२३ मा उल्लेख भएबमोजिम युद्धबन्दीहरूको केन्द्रीय कार्यालयलाई पठाउनेछ ।

## धारा ५५

समयसमयमा कम्तीमा महिनामा एकपटक कामका लागि युद्धबन्दीहरूको क्षमता स्वास्थ्य परीक्षणद्वारा प्रमाणित गरिनेछ । यस्तो जाँच गर्दा युद्धबन्दीहरूले गर्नुपर्ने कामको प्रकृतिका सम्बन्धमा विशेष ध्यान दिइनेछ ।

यदि कुनै युद्धबन्दीले आफूलाई काम गर्न असमर्थ ठान्छ भने शिविरको चिकित्सा अधिकारी समक्ष उपस्थित हुन उसलाई अनुमति दिइनेछ । उनीहरूको विचारमा काम गर्न अयोग्य बन्दीहरूलाई चिकित्सक वा शल्य चिकित्सकले त्यस कामबाट उन्मुक्ति दिइयोस् भनी सिफारिश गर्नसक्छ ।

## धारा ५६

श्रमिकहरूको दलको संगठन र प्रशासन, युद्धबन्दी शिविरको जस्तै हुनेछ ।

हरेक श्रमिक दल युद्धबन्दी शिविरको नियन्त्रणमा र यसको अङ्गको रुपमा रहनेछ । उक्त शिविरका सैनिक अधिकृतहरू र समादेशक (कमाण्डर), श्रमिक दलहरूमा प्रस्तुत महासन्धिका प्रावधानहरू पालन गराउनका लागि आफ्नो सरकारको निर्देशन अन्तर्गत जिम्मेवार हुनेछन् ।

शिविरको समादेशकले उसको शिविरमा आश्रित श्रमिक दलहरूको अद्यावधिक विवरण राख्नेछन् र शिविरको भ्रमण गर्न सक्ने संरक्षक शक्ति, रेडक्रसको अन्तर्राष्ट्रिय समिति वा युद्धबन्दीहरूलाई राहत उपलब्ध गराउने अन्य कुनै निकायका प्रतिनिधिहरूलाई यसबारे सूचित गर्नेछ ।

## धारा ५७

निजी व्यक्तिहरूका लागि काम गर्ने युद्धबन्दीहरू निजी व्यक्तिको सुरक्षा र संरक्षण गर्नका लागि जिम्मेवार भए तापनि, युद्धबन्दीहरूप्रति गरिने व्यवहार यस महासन्धिमा उल्लेख भएबमोजिमको प्रावधानभन्दा कम हुनेछैन । यस्ता युद्धबन्दीहरू बस्दा लाग्ने खर्च, हेरचाह, उपचार र कामको वेतनका लागि बन्दी बनाउने शक्ति, बन्दीहरू रहेको शिविरको सैनिक अधिकृतहरू र समादेशक पूर्ण रुपमा जिम्मेवार हुनेछन् ।

आफू आश्रित रहेको, शिविरका बन्दीका प्रतिनिधिहरूसँग सम्पर्कमा रहिरहने अधिकार, यस्ता युद्धबन्दीहरूलाई हुनेछ ।

## खण्ड ४

## युद्धबन्दीहरूको आर्थिक स्रोत

## धारा ५८

संघर्ष प्रारम्भ हुँदा र संरक्षक शक्तिसँग यस विषयमा व्यवस्था गर्न बाँकी रहेको अवस्थामा, बन्दी बनाउने शक्तिले युद्धबन्दीले आफूसँग नगद वा अन्य रुपमा राख्न पाउने रुपियाँको अधिकतम रकम निर्धारण गर्नेछ । उनीहरूको साथमा विधिवत रहेको र उनीहरूबाट लिइएको अथवा रोक्का गरिएको कुनै पनि बढी रकम, उनीहरूले जम्मा गरेको अन्य रकमका साथै उनीहरूको खातामा राखिनेछ र उनीहरूको स्वीकृति बिना अन्य कुनै पनि मुद्रामा परिवर्तन गरिनेछैन ।

यदि युद्धबन्दीहरूलाई शिविरभन्दा बाहिर नगद भुक्तानी गर्नेगरी सेवा अथवा वस्तु खरिद गर्न अनुमति प्रदान  गरिएको छ भने, यस्तो भुक्तानी बन्दी आफैले गर्नेछ वा सम्बन्धित व्यक्तिको

खाताबाट कट्टी गर्ने गरी शिविर प्रशासनले गर्नेछ । बन्दी बनाउने शक्तिले यस सम्बन्धमा आवश्यक नियमहरू बनाउनेछ ।

## धारा ५९

उनीहरूलाई कब्जा गरिएको समयमा, धारा १८ बमोजिम युद्धबन्दीहरूबाट लिइएको र बन्दी बनाउने शक्तिको मुद्रामा भएको नगद यस खण्डको धारा ६४ का प्रावधानहरूबमोजिम उनीहरूको छुट्टै खातामा राखिनेछ ।

युद्धबन्दीहरूबाट लिइएको अरु मुद्रामा परिवर्तन गर्न सकिने र बन्दी बनाउने शक्तिको मुद्रामा भएको रकम पनि, उनीहरूको छुट्टै खातामा जम्मा गरिनेछ ।

## धारा ६०

बन्दी बनाउने शक्तिले सबै युद्धबन्दीहरूलाई एक महिनाको अग्रिम वेतन उपलब्ध गराउनेछ जुन रकमको निर्धारण उक्त शक्तिको मुद्रामा तल लेखिएबमोजिम रकम परिवर्तन गरी, गरिनेछ :-

श्रेणी १ - सर्जेन्टभन्दा तलको दर्जा भएका बन्दीहरू : आठ स्विस फ्राङ्क ।

श्रेणी २ - सर्जेन्ट र आधिकारिक दर्जा नपाएका अरु अधिकृतहरू अथवा समान दर्जा भएका बन्दीहरू : बाह्र स्विस फ्राङ्क ।

श्रेणी ३ - वारन्ट अधिकृतहरू र मेजरभन्दा तल आधिकारिक दर्जा पाएका अधिकृतहरू अथवा समान दर्जा भएका बन्दीहरू : पचास स्विस फ्राङ्क

श्रेणी ४ - मेजर, लेफ्टिनेन्ट-कर्णेल अथवा समान दर्जा भएका बन्दीहरू : साठी स्विस फ्राङ्क

श्रेणी ५ - जर्नेल पदका अधिकृतहरू अथवा समान दर्जा भएका बन्दीहरू : पचहत्तर स्विस फ्राङ्क

तर सम्बन्धित संघर्षरत पक्षहरूले विशेष सम्झौताद्वारा माथि उल्लिखित श्रेणीहरूका बन्दीहरूलाई दिनुपर्ने अग्रिम वेतनको रकमलाई परिवर्तन गर्न सक्नेछन् ।

यसको साथै, यदि माथिको पहिलो प्रकरणमा जनाइएको रकम बन्दी बनाउने शक्तिका सैन्य दलको वेतनको तुलनामा अनुचित रुपमा बढी छ अथवा कुनै पनि कारणले बन्दी बनाउने शक्तिलाई गम्भीर रुपमा लज्जित पार्छ भने, त्यसपछि माथि लेखिएबमोजिमको रकमलाई परिवर्तन गर्न बन्दीहरू आश्रित रहेको शक्तिसँग विशेष सम्झौता नहुन्जेलसम्म बन्दी बनाउने शक्तिले :

(क) माथिको पहिलो प्रकरणमा जनाइएको रकम युद्धबन्दीहरूको खातामा जम्मा गर्ने काम जारी राख्नेछ,

(ख) अस्थायी रुपमा युद्धबन्दीहरूको आफ्नै प्रयोगका निमित्त दिइने पेश्की वेतनबाट उपलब्ध गराइने रकमलाई जायज रकममा सीमित गर्न सक्नेछ । तर, जुन रकम बन्दी बनाउने शक्तिले आफ्नो सैन्य दलका सदस्यहरूलाई दिने रकमभन्दा श्रेणी १ का लागि कहिल्यै पनि कम हुनु हुँदैन ।

रकम सीमित गर्नुको कारणको जानकारी अविलम्ब संरक्षक शक्तिलाई दिइनेछ ।

## धारा ६१

बन्दी बनाउने शक्तिलाई युद्धबन्दीहरू आश्रित रहेको शक्तिले पठाउन सक्ने रकम उल्लिखित शर्तमा युद्धबन्दीहरूलाई पूरक वेतनको रुपमा वितरण गर्न स्वीकार गर्नेछ, एउटै श्रेणीका हरेक बन्दीका लागि दिइने रकम बराबर हुनेछ, त्यस शक्तिमा आश्रित त्यस श्रेणीका सबै बन्दीहरूलाई भुक्तानी गरिनेछ र धारा ६४ को प्रावधानबमोजिम यथाशक्य चाँडो, उनीहरूको छुट्टै खातामा राखिनेछ । यस्तो पूरक वेतनले बन्दी बनाउने शक्तिलाई यस महासन्धि अन्तरगतको दायित्वबाट मुक्त गर्नेछैन ।

## धारा ६२

बन्दी बनाउने अधिकारीहरूद्वारा युद्धबन्दीहरूलाई काम गरेबापत राम्रो दरमा सोझै वेतनको भुक्तानी गरिनेछ । वेतनको दर तिनै अधिकारीहरूद्वारा नै तोकिनेछ तर पूरा १ दिनको कामको लागि कुनै पनि हालतमा, एक स्विस फ्राङ्को एकचौथाइभन्दा कम हुनेछैन । बन्दी बनाउने शक्तिले आफूद्वारा निर्धारित कामको एक दिनको ज्यालाको दरबारे युद्धबन्दीहरूलाई र साथसाथै तिनीहरू आश्रित रहेको शक्तिलाई संरक्षक शक्तिको मध्यस्थद्वारा जानकारी दिनेछ ।

कामको वेतन यसरी नै, बन्दी बनाउने अधिकारीहरूद्वारा स्थायी रुपमा काममा लगाइएका अथवा शिविरको प्रशासन, जडान अथवा मरम्मतसँग सम्बन्धित दक्ष र अर्धदक्ष काममा लगाइएका र आफ्ना सहकर्मीहरूका निम्ति आध्यात्मिक र स्वास्थ्यसम्बन्धी कर्तव्य पालन गर्नुपर्ने बन्दीहरूलाई भुक्तान गरिनेछ ।

बन्दीहरूका प्रतिनिधि, यदि भएमा उनका सल्लाहकारहरू र उसका सहायकहरूको कामको वेतन चमेनागृहमा भएको नाफाबाट खडा गरिएको कोषबाट तिरिनेछ । यस कामका लागि वेतनमान बन्दीहरूका प्रतिनिधिद्वारा निर्धारित र शिविर समादेशकबाट स्वीकृत गरिनेछ । यदि यस्तो कोष नभएमा बन्दी बनाउने अधिकारीहरूद्वारा कामका लागि वेतनको राम्रो दरमा भुक्तान गरिनेछ ।

## धारा ६३

युद्धबन्दीहरूलाई व्यक्तिगत वा सामूहिक रुपमा पठाइएको पैसा प्राप्त गर्न अनुमति प्रदान गरिनेछ।

देहायको धारामा उल्लेख भएबमोजिम बन्दी बनाउने शक्तिद्वारा तोकिएको सीमाभित्र हरेक युद्धबन्दीलाई आफ्नो साथमा आफ्नो खातामा बाँकी रहेको रकमको विवरण राख्न अनुमति दिइनेछ र बन्दी बनाउने शक्तिले अनुरोध भए बमोजिम यसको भुक्तानी दिनेछ। बन्दी बनाउने शक्तिले आवश्यक ठानेको वित्तीय र मौद्रिक नियन्त्रणको अधीन रही युद्धबन्दीहरूले विदेशमा पनि रकमको भुक्तानी पठाउन सक्नेछन्। यस्तो परिस्थितिमा युद्धबन्दीहरूद्वारा आश्रितहरूको नाममा पठाइएको भुक्तानीलाई प्राथमिकता दिइनेछ।

कुनै पनि अवस्थामा र उनीहरू आश्रित रहेको शक्तिको सहमतिको अधीन रही युद्धबन्दीहरूले देहाय बमोजिम आफ्नो मुलुकमा पैसाको भुक्तानी लिन सक्नेछन् : बन्दी बनाउने शक्तिले युद्धबन्दीसँग सम्बन्धित सबै आवश्यक विवरण, भुक्तानीबाट लाभान्वित हुने व्यक्ति र बन्दी बनाउने शक्तिको मुद्रामा उल्लेख गरिएको भुक्तानी दिने रकमको सूचना संरक्षक शक्तिमार्फत, माथि उल्लिखित शक्तिलाई दिनेछ। सो सूचनामा बन्दीहरूले हस्ताक्षर गरेको हुनुपर्नेछ र शिविरको कमाण्डरले प्रति-हस्ताक्षर गरेको हुनुपर्नेछ। बन्दी बनाउने शक्तिले सो बराबरको रकम बन्दीको खातामा खर्च देखाउनेछ। यसरी खर्च जनाइएको रकम निजले युद्धबन्दीहरू आश्रित रहेको शक्तिको खातामा आम्दानी देखाउनेछ।

माथिका प्रावधानहरू लागू गर्न बन्दी बनाउने शक्तिको लागि प्रस्तुत महासन्धिको अनुसूची ५ मा उल्लिखित नमूना नियमहरू हेर्नु उपयोगी हुन सक्नेछ।

## धारा ६४

बन्दी बनाउने शक्तिले प्रत्येक युद्धबन्दीका लागि कम्तीमा पनि देहायका कुरा देखाइएको खाता राख्नेछ :

(१) बन्दीले पाउनु पर्ने रकम वा निजले प्राप्त गरेको अग्रिम तलव वा काम गरेबापतको तलव अथवा अरु स्रोतबाट प्राप्त रकम उसबाट लिइएको बन्दी बनाउने शक्तिको मुद्रामा रहेको रकम, र निजको अनुरोधमा सो शक्तिको मुद्रामा परिवर्तन गरिएको उसबाट लिइएका रकम।

(२) बन्दीलाई नगद अथवा यस्तै अन्य रुपमा गरिएको भुक्तानी, उसको तर्फबाट र उसको अनुरोधमा गरिएको भुक्तानी र धारा ६३ को तेस्रो अनुच्छेद अन्तर्गत हस्तान्तरण गरिएको रकम।

## धारा ६५

युद्धबन्दीको खातामा गरिएको हरेक प्रविष्टीमा उसले प्रतिहस्ताक्षर अथवा छोटो सही अथवा उसको तर्फबाट काम गर्ने युद्धबन्दीको प्रतिनिधिले सही गरेको हुनुपर्नेछ ।

युद्धबन्दीहरूलाई सधै आफ्नो खाता हेर्न र त्यसको प्रतिलिपि प्राप्त गर्ने समुचित सुविधा उपलब्ध गराइनेछ र त्यसरी नै यसको निरीक्षण शिविरको भ्रमणको समयमा संरक्षक शक्तिका प्रतिनिधिहरूले पनि गर्न सक्नेछन् ।

युद्धबन्दीहरूलाई एउटा शिविरबाट अर्को शिविरमा सार्दा उनीहरूको निजी खाता पनि उनीहरूसँगै सारिनेछ । बन्दी बनाउने एउटा शक्तिबाट अर्को शक्तिमा सारिँदाको अवस्थामा उनीहरूको सम्पत्तिको रुपमा रहेको र बन्दी बनाउने शक्तिको मुद्रामा नभएको रुपियाँ उनीहरूसँग पठाइनेछ । उनीहरूको खातामा बाँकी देखाइएको अरु कुनै पनि रुपियाँको लागि उनीहरूलाई प्रमाणपत्र दिइनेछ ।

सम्बन्धित संघर्षका पक्षहरूले संरक्षक शक्तिमार्फत युद्धबन्दीहरूका खाताहरूमा रहेको रकमको जानकारी, निश्चित अन्तरालमा एकअर्कालाई दिने गरी सहमति गर्न सक्छन् ।

## धारा ६६

कुनै युद्धबन्दीलाई मुक्त गरेर अथवा स्वदेश फिर्ता पठाएर बन्दी अवस्था समाप्त हुँदा, उसलाई तिर्न बाँकी रहेको रकम देखिने गरी उसलाई बन्दी बनाउने शक्तिले सो शक्तिको अख्तियारप्राप्त अधिकृतद्वारा हस्ताक्षरित एउटा विवरण दिनेछ । युद्धबन्दीहरू जुन शक्तिमाथि आश्रित छन् सो शक्तिको सरकारलाई बन्दी बनाउने शक्तिले स्वदेश फर्काएर, मुक्त गरेर, भागेर, मृत्यु भएर अथवा अरु कुनै उपायबाट जसको बन्दी अवस्था समाप्त भएको छ, भने त्यस्ता सबै युद्धबन्दीहरूका सूचीहरू र उनीहरूलाई तिर्न बाँकी रहेको रकम देखाइएको सूची पनि संरक्षक शक्ति मार्फत पठाउनेछ । यस्तो सूचीहरू बन्दी बनाउने शक्तिका अधिकारप्राप्त प्रतिनिधिद्वारा हरेक पानामा प्रमाणित गरिएको हुनेछ ।

यस धाराका माथिका प्रावधानहरूमध्ये कुनै पनि प्रावधानलाई, संघर्षको कुनै दुई पक्षका बीचमा, पारस्परिक सम्झौताद्वारा परिवर्तन गर्न सकिनेछ ।

बन्दी अवस्था समाप्त भएपछि युद्धबन्दी आश्रित रहेको शक्तिले युद्धबन्दीहरूलाई बन्दी बनाउने शक्तिले, निजलाई तिर्नबाँकी रकमको हिसाब-किताब मिलाउन जिम्मेवार हुन्छ ।

## धारा ६७

धारा ६० अनुरुप युद्धबन्दीहरूलाई दिइएको तलव पेश्की रकम, उनीहरू आश्रित रहेको शक्तिका तर्फबाट दिइएको मानिनेछ । धारा ६३ को तेस्रो प्रकरण र धारा ६८ अन्तर्गत सो शक्तिद्वारा गरिएका सबै भुक्तानी र संघर्ष समाप्त भएपछि यस्तो तलव पेश्की भुक्तानी सम्बन्धित शक्तिहरूका बीच समायोजनका विषय बन्नेछन् ।

## धारा ६८

कामको कारणबाट भएको कुनै चोटपटक अथवा अपाङ्गता सम्बन्धमा क्षतिपूर्ति बापत युद्धबन्दीले गरेको दाबी, संरक्षक शक्तिमार्फत निज आश्रित रहेको शक्तिकहाँ पठाइनेछ । धारा ५४ बमोजिम बन्दी बनाउने शक्तिले सबै परिस्थितिमा सम्बन्धित युद्धबन्दीलाई लागेको चोटपटक अथवा अपाङ्गताको प्रकृति, कुन परिस्थितिमा यस्तो भयो र यसका लागि औषधोपचार अथवा अस्पतालमा गरिएको उपचारको सबै विवरण खुलाई एउटा विवरण उपलब्ध गराउनेछ । यस विवरणमा बन्दी बनाउने शक्तिको जिम्मेवार अधिकृतद्वारा हस्ताक्षर गरिनेछ र औषधोपचार सम्बन्धी विवरण मेडिकल अधिकृतद्वारा प्रमाणित गरिनेछ ।

धारा १८ अन्तर्गत बन्दी बनाउने शक्तिले कब्जामा लिएका र ऊ स्वदेश फर्कँदा सँगै नल्याइएका व्यक्तिगत सामान, रुपियाँ वा बहुमूल्य सामानका सम्बन्धमा अथवा बन्दी बनाउने शक्ति अथवा उसका कुनै पनि कर्मचारीहरूको गल्तीको कारणबाट भएको भनी दोष लगाइएको हानिनोक्सानीका सम्बन्धमा क्षतिपूर्तिका लागि युद्धबन्दीद्वारा गरिएको कुनै पनि दाबी त्यसरी नै ऊ जुन शक्तिमाथि आश्रित छ, उसैकहाँ पठाइनेछ । तर बन्दी अवस्थामा हुँदा युद्धबन्दीले प्रयोग गर्नुपर्ने यस्ता व्यक्तिगत सामानको सोधभर्ना, बन्दी बनाउने शक्तिको खर्चमा गरिनेछ । बन्दी बनाउने शक्तिले सबै परिस्थितिमा यस्ता सामान किन युद्धबन्दीलाई फिर्ता गरिएको छैन भन्ने कारणका सम्बन्धमा सबै जानकारी खुलाई जिम्मेवार अधिकृतद्वारा हस्ताक्षरित विवरण उपलब्ध गराउनेछ, धारा १२३ मा व्यवस्थित केन्द्रीय युद्धबन्दी निकाय मार्फत यस्तो विवरणको एक प्रति, निज आश्रित रहेको शक्तिलाई पठाइनेछ ।

## खण्ड ५
## युद्धबन्दीहरूको बाह्य सम्बन्ध
## धारा ६९

आफ्नो नियन्त्रणमा युद्धबन्दीहरू आउने बित्तिकै, बन्दी बनाउने शक्तिले उनीहरूलाई र उनीहरू आश्रित रहेको शक्तिलाई संरक्षक शक्तिमार्फत यस खण्डका प्रावधानहरूको कार्यान्वयनका लागि

चालिएका कदमहरूबारे जानकारी दिनेछ । उनीहरूले यसरी नै सम्बन्धित पक्षलाई यस्ता कदमहरूमा पछि गरिएको, कुनै पनि परिवर्तनबारे जानकारी दिनेछन् ।

## धारा ७०

कब्जामा लिनेबित्तिकै अथवा बाटोमा पर्ने शिविर भए पनि सो शिविरमा पुगिसकेको बढीमा एक हप्तापछि, त्यस्तै बिरामी हुँदा वा अस्पताल अथवा अर्को शिविरमा सार्दा एकातर्फ आफ्नो परिवारलाई सोझै लेख्न प्रत्येक युद्धबन्दीलाई सक्षम पारिनेछ र अर्कोतर्फ धारा १२३ मा उल्लिखित केन्द्रीय युद्धबन्दी निकायलाई आफूलाई गरिएको कब्जा, आफ्नो ठेगाना र स्वास्थ्यको अवस्थाबारे जानकारी सहित सम्भव भएमा, प्रस्तुत महासन्धिमा संलग्न अनुसूचीको नमुना बमोजिमका कार्ड पठाई, आफ्ना नातेदारहरूलाई सूचित गर्न हरेक युद्धबन्दीलाई सक्षम पारिनेछ । ती कार्डहरू यथासम्भव चाँडो पठाइनेछन् र कुनै किसिमले ढीलो गरिनेछैन ।

## धारा ७१

युद्धबन्दीहरूलाई चिठ्ठी र कार्ड पठाउन र प्राप्त गर्न अनुमति दिइनेछ । यदि युद्धबन्दीले पठाउने चिठ्ठी र कार्डको संख्यालाई बन्दी बनाउने शक्तिले सीमित गर्न चाहन्छ भने सो संख्या, धारा ७० मा व्यवस्था गरिएको कब्जा सम्बन्धी कार्ड बाहेक हरेक महिना दुई चिठ्ठी र चार कार्डभन्दा कम हुनेछैन र सम्भव भएसम्म प्रस्तुत महासन्धिको अनुसूचीको ढाँचा अनुरुप हुनु पर्नेछ । आवश्यक छानविन गर्ने योग्य भाषाविद्हरू संरक्षक शक्तिले प्राप्त गर्न असमर्थ भएको र अनुवादमा उत्पन्न कठिनाइको कारणबाट युद्धबन्दीहरूको हितमा छ भन्ने कुरामा संरक्षक शक्तिलाई चित्त बुझेमा मात्र अरु थप सीमा लगाउन सकिनेछ । युद्धबन्दीका नाममा पठाइने चिठ्ठीमा सीमा लगाउनु नै पर्छ भने उनीहरू जुन शक्तिमाथि आश्रित छन् सो शक्तिद्वारा सम्भवतः बन्दी बनाउने शक्तिको अनुरोधमा, लगाउन सकिनेछ । बन्दी बनाउने शक्तिको मातहतमा रहेको सबभन्दा छिटो तरिकाद्वारा यस्ता चिठ्ठी र कार्डहरू पठाइनेछन् । अनुशासनसम्बन्धी कारणबाट तिनलाई विलम्ब गर्न वा रोक्न सकिनेछैन ।

लामो समयसम्म खबर नै नपाएका अथवा आफ्ना नजिकका नातेदारबाट खबर प्राप्त गर्न अथवा उनीहरूलाई सामान्य हुलाकी मार्गबाट खबर दिन असमर्थ भएका साथै आफ्नो घरबाट धेरै टाढा रहेका युद्धबन्दीहरूलाई टेलिग्राम पठाउने अनुमति दिइनेछ र सो को शुल्क बन्दी बनाउने शक्तिसँग रहेको युद्धबन्दीको खाताबाट कट्टी गरिनेछ अथवा उनीहरूको स्वेच्छामा रहेको पैसाबाट भुक्तानी गरिनेछ । यसरी उनीहरूले यस कदमबाट आकस्मिक परिस्थितिमा लाभ लिन पाउनेछन् ।

सामान्य नियमको रुपमा युद्धबन्दीहरूको पत्रव्यवहार उनीहरूको आफ्नै देशको भाषामा लेखेर गरिएको हुनेछ । संघर्षका पक्षहरूले अरु भाषामा पनि पत्रव्यवहार गर्न अनुमति दिन सक्नेछन् ।

युद्धबन्दीहरूको चिट्ठी भएका पोकाहरू सुरक्षित रुपमा लाहाछाप लगाएको हुनुपर्छ र त्यसभित्र रहेको सामग्रीहरू स्पष्टसँग जनाउन, झोलामा लेबल लगाएको हुनुपर्छ र पुग्नु पर्ने कार्यालयको ठेगाना लेखिएको हुनुपर्छ ।

## धारा ७२

युद्धबन्दीहरूले आफ्नो अध्ययन वा आफ्ना साँस्कृतिक गतिविधि संचालन गर्न सकुन् भन्नका लागि खास गरेर खाद्य सामग्री, लुगाफाटा, औषधी आपूर्ति र तिनीहरूको आवश्यकता पूरा गर्न सक्ने धार्मिक, शैक्षिक वा मनोरञ्जनात्मक प्रकृतिका सामग्रीहरू, पुस्तकहरू, भक्तिसम्बन्धी वस्तुहरू, वैज्ञानिक उपकरण, परीक्षाका कपीहरू, सांगीतिक बाजा, खेलका लुगा र सामान भएका निजी पोका वा सामूहिक रुपमा पठाइएका सामग्रीहरू, हुलाक वा अन्य साधनबाट प्राप्त गर्न युद्धबन्दीहरूलाई अनुमति दिइनेछ ।

यसरी पठाइएको सामानले प्रस्तुत महासन्धिको कारणबाट पालन गर्नुपर्ने दायित्वबाट बन्दी बनाउने शक्तिलाई कुनै पनि रुपमा मुक्त गर्ने छैन ।

ढुवानी तथा संचारमा अत्याधिक चाप पर्न गएको कारणले पठाउने सामानका सम्बन्धमा बन्दीहरूकै हितलाई ध्यानमा राखेर संरक्षक शक्तिबाट अथवा रेडक्रसको अन्तर्राष्ट्रिय समितिद्वारा अथवा बन्दीहरूलाई सहयोग गर्ने अन्य कुनै संस्थाद्वारानै सीमित तुल्याउन प्रस्ताव गरिनेछ ।

आवश्यक भए व्यक्तिगत पार्सल र सामूहिक राहत सामग्री पठाउने शर्तहरू सम्बन्धित शक्तिहरू बीचको विशेष सम्झौताका विषय हुनेछन् । तर यसले कुनै पनि हालतमा बन्दीहरूले पाउने उद्धार सामग्रीको प्राप्तिलाई विलम्ब गराउन सक्नेछैन । लुगा र खाद्य सामग्रीको पोकाभित्र पुस्तक राख्न सकिनेछैन । औषधोपचार सामग्री नियम बमोजिम सामूहिक पोकामा पठाउनु पर्नेछ ।



## धारा ७३

सामूहिक रुपमा पठाइएका सामूहिक राहत सामग्रीको प्राप्ति र वितरण सम्बन्धी शर्तहरूबारे सम्बन्धित शक्तिहरूका बीचमा विशेष सम्झौता भएको छैन भने प्रस्तुत महासन्धिसँग संलग्न अनुसूचीमा भएका सामूहिक रुपमा पठाइएका सामानहरू सम्बन्धी नियम नै लागू हुनेछन् ।

माथि उल्लेख गरिएको विशेष सम्झौताले कुनै पनि हालतमा युद्धबन्दीहरूका लागि पठाइएको सामूहिक उद्धार सामग्री आफ्नो स्वामित्वमा लिने, वितरण कार्यलाई अघि बढाउने र बन्दीहरूको हितमा त्यसको प्रयोग गर्नेबारे, बन्दीहरूका प्रतिनिधिहरूको अधिकारलाई बन्देज लगाउनेछैन ।

न त यस्तो सम्झौताले संरक्षक शक्ति, रेडक्रसको अन्तर्राष्ट्रिय समिति वा युद्धबन्दीहरूलाई सहयोग उपलब्ध गराउने र सामूहिक रुपमा सामान पठाउने जिम्मेवारी भएका अन्य कुनै संस्थाका प्रतिनिधिहरूलाई सामान पाउने व्यक्तिहरूको बीचमा गरिने वितरणको सुपरिवेक्षण गर्ने अधिकार माथि बन्देज लगाउनेछ ।

## धारा ७४

युद्धबन्दीहरूका लागि पठाइने सबै राहत सामग्रहिरूमा आयात, भन्सार र अन्य सबै शुल्क छुट हुनेछ ।

युद्धबन्दीहरूलाई वा युद्धबन्दीहरूद्वारा सोझै अथवा धारा १२२ मा व्यवस्था गरिएबमोजिम सूचना कार्यालय र धारा १२३ मा व्यवस्था गरिएको केन्द्रीय युद्धबन्दी निकाय मार्फत हुलाकद्वारा पठाइएका पत्रव्यवहार, राहत सामग्री र अधिकृत रुपमा पठाइएको भुक्तानी पठाउने र पाउने दुबै मुलुक र बीचका मुलुकहरूमा समेत लाग्ने कुनै पनि हुलाक शुल्कबाट मुक्त हुनेछ ।

युद्धबन्दीहरूका लागि पठाइएका उद्धार सामग्री तौलको कारणबाट अथवा अरु कुनै कारणबाट हुलाकबाट पठाउन सकिएन भने आफ्नो नियन्त्रण अन्तर्गतको क्षेत्रमा ढुवानी खर्च, बन्दी बनाउने शक्तिले व्यहोर्नेछ । महासन्धिका पक्ष भएका अरु शक्तिहरूले आ-आफ्नो मुलुकमा ढुवानी खर्च व्यहोर्नेछन् । सम्बन्धित पक्षहरू बीच विशेष सम्झौता भएको छैन भने माथिको छुट बाहेकका यस्ता सामानको ढुवानीसँग सम्बन्धित खर्च पठाउनेले नै तिर्नुपर्नेछ ।

संविदाकारी पक्षहरूले युद्धबन्दीहरूद्वारा अथवा उनीहरूका नाममा पठाइने टेलिग्रामको शुल्क दर सम्भव भएसम्म कम गर्ने प्रयास गर्नेछन् ।

## धारा ७५

धाराहरू ७०,७१, ७२ र ७७ मा उल्लेख भएका सामानको, ढुवानी सुनिश्चित गर्ने आफ्नो दायित्व पालन गर्ने कार्यबाट सम्बन्धित शक्तिहरूलाई सैनिक कारबाहीले रोक्यो भने, सम्बन्धित संरक्षक शक्ति, रेडक्रसको अन्तर्राष्ट्रिय समिति अथवा संघर्षरत पक्षहरूद्वारा विधिवत् स्वीकृत अन्य कुनै संगठनले उपयुक्त साधन (रेलवेका डिब्बा, मोटर गाडी, पानी जहाज अथवा विमान आदि) द्वारा यस्तो पक्षहरूले उनीहरूलाई यस्तो परिवहन उपलब्ध गराएर विशेष गरी आवश्यक सुरक्षित आवत जावत गर्न दिएर, यसको संचालनको लागि प्रयास गर्नेछन् ।

यस्तो परिवहनले देहायका वस्तुहरू पनि ढुवानी गर्न सक्नेछ :-

(क) धारा १२३ मा उल्लिखित केन्द्रीय सूचना संस्था र धारा १२२ मा उल्लिखित राष्ट्रिय ब्यूरोका बीचमा आदान-प्रदान भएका पत्रव्यवहार, सूचीहरू र प्रतिवेदनहरू,

(ख) संरक्षक शक्ति, रेडक्रसको अन्तर्राष्ट्रिय समिति अथवा बन्दीहरूलाई सहयोग गर्ने अन्य कुनै निकायको आफ्ना प्रतिनिधिहरू अथवा संघर्षका पक्षहरूसँग आदानप्रदान गरेका युद्धबन्दीहरूसँग सम्बन्धित पत्रव्यवहार र प्रतिवेदनहरू ।

यी प्रावधानहरूले संघर्षको कुनै पक्षलाई, निजले चाहेको खण्डमा यातायातको अन्य साधनको प्रबन्ध गर्ने निजको अधिकारलाई कुनै पनि हालतमा न्यून पार्दैन, न त यातायातका यस्ता साधनहरूलाई पारस्परिक रुपमा मञ्जुर गरिएका शर्तहरूको अधीन रही सुरक्षित आवत जावत गर्न दिनबाट मनाही गर्छ ।

विशेष सम्झौता नभएको खण्डमा, यातायातका यस्ता साधनको प्रयोगमा भएको खर्च, जुन देशका नागरिकहरू त्यसबाट लाभान्वित हुन्छन्, संघर्षका ती पक्षहरूले समानुपातिक रुपमा व्यहोर्नेछन् ।

## धारा ७६

युद्धबन्दीहरूका नाममा पठाइएका अथवा युद्धबन्दीहरूद्वारा पठाइएका पत्रव्यवहारको जाँच गर्ने काम यथासम्भव चाँडो गरिनेछ । चिठ्ठीको सेन्सर पठाउने देश र प्राप्त गर्ने देश प्रत्येकले एकएक पटक मात्र गर्नेछन् ।

युद्धबन्दीहरूका लागि पठाइएको सामानको जाँच ती सामानहरू बिग्रने गरी गरिनेछैन, लिखित वा मुद्रित सामग्रीका हकमा बाहेक यस्तो जाँच जसले सामान पाउने हो उसको अथवा उसद्वारा विधिवत् तोकिएको सह-बन्दीको उपस्थितिमा गरिनेछ । व्यक्तिगत अथवा सामूहिक रुपमा युद्धबन्दीहरूलाई पठाइएको सामान बुझाउने काम 'जाँच' को कठिनाइको बहानामा विलम्ब गरिनेछैन ।

संघर्षका पक्षहरूद्वारा पत्रव्यवहारमाथि लगाइएको कुनै पनि प्रतिबन्ध, चाहे त्यो सैनिक अथवा राजनीतिक कारणले लगाइएको होस्, अस्थायी मात्र हुनेछ र यसको अवधि सम्भव भएसम्म, छोटो हुनेछ ।

## धारा ७७

बन्दी बनाउने शक्तिले संरक्षक शक्ति अथवा धारा १२३ मा व्यवस्था भएबमोजिम केन्द्रीय युद्धबन्दी निकायमार्फत युद्धबन्दीहरूका लागि पठाइएका अथवा उनीहरूले पठाएका कानुनी लिखतहरू,

कागजपत्र र कागजातहरू, खास गरी अख्तियारनामा र वसियतनामा पठाउन, बन्दी बनाउने शक्तिले सम्पूर्ण सुविधा उपलब्ध गराउनेछ ।

सबै परिस्थितिमा युद्धबन्दीहरूका निमित्त यस्ता अभिलेखको तयारी र कार्यान्वयनमा उनीहरूले सहयोग गर्नेछन्, खास गरेर उनीहरूले तिनीहरूलाई वकिलसँग परामर्श गर्न अनुमति दिनेछन् र उनीहरूको हस्ताक्षरलाई प्रमाणित गर्नका लागि आवश्यक उपायहरू गर्नेछन् ।

## खण्ड ६

## युद्धबन्दीहरू र अधिकारीहरू बीचको सम्बन्ध

## परिच्छेद १

## बन्दी अवस्थाको बारेमा युद्धबन्दीहरूको उजुरी

### धारा ७८

युद्धबन्दीहरूलाई उनीहरूको बन्दी अवस्थाका सम्बन्धमा उनीहरू जुन सैनिक अधिकारीको अधीन छन्, ती अधिकारीहरूसमक्ष आफ्नो अनुरोध प्रस्तुत गर्ने अधिकार हुनेछ ।

युद्धबन्दीहरूलाई आफ्नो बन्दी अवस्थाबारे उजुर गर्नु पर्ने विषयमा संरक्षक शक्तिको ध्यानाकर्षण गर्न बन्दीहरूको प्रतिनिधि मार्फत वा आवश्यक ठानेमा सोझै आफैले संरक्षक शक्तिहरूका प्रतिनिधिहरू समक्ष आवेदन गर्न उनीहरूलाई असीमित अधिकार हुनेछ ।

यी अनुरोध र उजुरीहरू सीमित हुने छैनन न त धारा ७१ मा उल्लिखित पत्र व्यवहारको कोटाको एउटा अङ्ग नै मानिने छन् । यिनलाई तुरुन्तै पठाउनु पर्नेछ । ती आधारहीन छन् भन्ने पत्ता लागेमा पनि ती दण्डको कारण हुन सक्दैनन् ।

बन्दीका प्रतिनिधिहरूले समयसमयमा शिविरको स्थिति र युद्धबन्दीहरूको आवश्यकताबारे संरक्षक शक्तिका प्रतिनिधिहरूलाई प्रतिवेदन पठाउन सक्नेछन् ।

## परिच्छेद २

## युद्धबन्दीका प्रतिनिधिहरू

### धारा ७९

अधिकृतहरू भएको ठाउँमा बाहेक युद्धबन्दीहरू भएका सबै ठाउँहरूमा बन्दीहरूले सैनिक अधिकारीहरू, संरक्षक शक्तिहरू, रेडक्रसको अन्तर्राष्ट्रिय समिति र उनीहरूलाई मद्दतगर्न सक्ने कुनै पनि संगठनसमक्ष, उनीहरूको प्रतिनिधित्व गर्न जिम्मेवारी दिइएका बन्दीहरूका प्रतिनिधिहरूको निर्वाचन हरेक ६ महिनामा र पद रिक्त भएको अवस्थामा पनि, स्वतन्त्र रुपमा गोप्य मतदानद्वारा गर्नेछन् । बन्दीहरूका यी प्रतिनिधिहरू पुनः निर्वाचनका लागि योग्य हुनेछन् ।

अधिकृतहरू र समान हैसियत भएका व्यक्तिहरूको शिविरमा अथवा मिश्रित शिविरमा युद्धबन्दीहरूमध्येका वरिष्ठ अधिकृतलाई शिविरका बन्दीहरूको प्रतिनिधिको रुपमा मान्यता प्रदान गरिनेछ । अधिकृतहरूको शिविरमा अधिकृतहरूद्वारा छानिएका एक वा एकभन्दा बढी सल्लाहकारहरूद्वारा उसलाई सहयोग पुऱ्याइनेछ । मिश्रित शिविरहरूमा उसका सहायकहरूको चयन अधिकृत बाहेकका युद्धबन्दीहरूमध्येबाट उनीहरूले नै निर्वाचनद्वारा गर्नेछन् ।

एउटै राष्ट्रियता भएका अधिकृत स्तरका युद्धबन्दीहरूलाई युद्धबन्दीहरूको श्रम शिविरमा युद्धबन्दीहरू जिम्मेवार रहेको शिविरको प्रशासन सम्बन्धी काम गर्ने प्रयोजनको लागि तैनाथ गरिनेछ । यी अधिकृतहरू यस धाराको पहिलो प्रकरण अन्तरगत बन्दीहरूका प्रतिनिधिहरूको रुपमा निर्वाचित हुनेछन् । यस्तो विषयमा बन्दीहरूका प्रतिनिधिहरूका सहायकहरू गैर अधिकृत बन्दीहरूबाट छनौट गरिनेछ ।

हरेक निर्वाचित प्रतिनिधिहरूलाई आफ्नो काम शुरु गर्ने अधिकार हुनुभन्दा पहिले बन्दी बनाउने शक्तिद्वारा स्वीकृत गरिएको हुनैपर्छ । यदि बन्दी बनाउने शक्तिले युद्धबन्दीहरूद्वारा निर्वाचित कुनै युद्धबन्दीलाई मञ्जुरी दिन अस्वीकार गऱ्यो भने यस्तो अस्वीकृतिको कारणको जानकारी यसले संरक्षक शक्तिलाई दिनुपर्छ ।

सबै परिस्थितिमा युद्धबन्दीहरूको जुन राष्ट्रियता, भाषा र चलन हुन्छ, तिनलाई प्रतिनिधित्व गर्ने बन्दीको प्रतिनिधिको पनि उही हुनुपर्छ । यसरी माथिका प्रकरणहरू बमोजिम एउटै शिविरमा उनीहरूको राष्ट्रियता, भाषा अथवा चलनबमोजिम फरक फरक खण्डहरूमा बाँडिएका युद्धबन्दीहरूका हरेक खण्डका लागि आफ्नै प्रतिनिधिहरू हुनेछन् ।

## धारा ८०

बन्दीका प्रतिनिधिहरूले युद्धबन्दीहरूको शारीरिक, आध्यात्मिक र बौद्धिक कल्याणको प्रवर्धन गर्नेछन् ।

खास गरी बन्दीहरूले आफूबीच पारस्परिक सहयोगको पद्धतिको संगठन गर्ने निर्णय गरेको खण्डमा यो संगठन वर्तमान महासन्धिका अरु प्रावधानहरूले निजलाई सुम्पेका विशेष अभिभाराका अतिरिक्त बन्दीहरूका प्रतिनिधिहरूको कार्य क्षेत्रभित्र हुनेछ ।

बन्दीका प्रतिनिधिहरूलाई खाली तिनीहरूको कर्तव्यको कारणले, युद्धबन्दीहरूले गरेको कुनै पनि अपराधका निमित्त जिम्मेवार ठहऱ्याइने छैन ।

## धारा ८१

युद्धबन्दीका प्रतिनिधिहरूले गर्नुपर्ने कुनै कामले गर्दा उनीहरूको कर्तव्य पूरा गर्न बढी कठिन बनाउँछ भने, उनीहरूले यस्तो काम गर्नुपर्ने छैन ।

बन्दीका प्रतिनिधिहरूले आफ्नो आवश्यकता बमोजिम बन्दीहरूमध्येबाट आफ्ना सहायक नियुक्त गर्न सक्नेछन् । सम्पूर्ण भौतिक सुविधाहरू, खास गरी तिनीहरूको कार्य सम्पादनका लागि आवश्यक आवागमनमा केही स्वतन्त्रता (श्रमिक दलको निरीक्षण, सामग्री बुझ्ने आदि) प्रदान गरिनेछ ।

बन्दीका प्रतिनिधिहरूलाई युद्धबन्दीहरू थुनिएका भवनहरूमा जान अनुमति प्रदान गरिनेछ र हरेक युद्धबन्दीलाई आफ्नो प्रतिनिधिसँग स्वतन्त्रतापूर्वक परामर्श गर्ने अधिकार हुनेछ ।

यसरी नै युद्धबन्दीका प्रतिनिधिहरूलाई हुलाक र टेलिग्राफमार्फत, बन्दी बनाउने अधिकारीहरू, संरक्षक शक्तिहरू, रेडक्रसको अन्तर्राष्ट्रिय समिति र यसका प्रतिनिधिहरू, मिश्रित मेडिकल आयोगहरू र युद्धबन्दीहरूलाई सहयोग र उपलब्ध गराउने निकायहरूसँग सम्पर्क गर्न, सबै सुविधा प्रदान गरिनेछ । श्रमिक दलका बन्दीका प्रतिनिधिहरूले मुख्य शिविरका बन्दी प्रतिनिधिहरूसँग सम्पर्क गर्न त्यस्तै सुविधा उपभोग गर्न सक्नेछन् । यस्तो सम्पर्क न नियन्त्रित हुनेछ न त धारा ७१ मा उल्लेख गरिएको कोटाको अङ्ग मानिनेछ ।

स्थानान्तरण गरिएका बन्दीका प्रतिनिधिहरूलाई वर्तमान घटनाहरूबारे आफ्ना उत्तराधिकारीहरूलाई अवगत गराउन पर्याप्त समय दिइनेछ ।

बर्खास्तगीको अवस्थामा, यसको कारण बारेको जानकारी संरक्षक शक्तिलाई प्रदान गरिनेछ ।

## परिच्छेद ३

## दण्डात्मक तथा अनुशासनात्मक कारबाही

### १. सामान्य प्रावधानहरू

## धारा ८२

बन्दी बनाउने शक्तिको सैन्य दलमा लागू भएका कानुन, नियम र आदेशको अधीन युद्धबन्दी रहनु पर्नेछ । बन्दी बनाउने शक्तिले यस्ता कानुन, नियम र आदेशका विरुद्ध युद्धबन्दीले गरेको अपराधका सम्बन्धमा न्यायिक अथवा अनुशासनात्मक कदम चालेमा न्यायोचित ठानिनेछ । तर यस अध्यायका प्रावधानहरू विपरीत कारबाही अथवा दण्डलाई अनुमति दिइनेछैन ।

यदि बन्दी बनाउने शक्तिको कुनै कानुन, नियम अथवा आदेशले युद्धबन्दीद्वारा गरिएको कुनै कामलाई दण्डनीय घोषित गर्छ, जबकि बन्दी बनाउने शक्तिको सैन्य बलको सदस्यद्वारा गरिने सोही काम दण्डनीय हुँदैन भने, यस्तो काममा अनुशासनात्मक सजाय मात्र गरिनेछ ।

## धारा ८३

कुनै युद्धबन्दीद्वारा गरेको भनिएको कुनै खास अपराध सम्बन्धमा गरिने कारबाही न्यायिक वा अनुशासनात्मक कस्तो हुने भन्नेबारे निर्णय गर्दा उपयुक्त पदाधिकारीहरूले बढी उदारता प्रदर्शन गर्नुपर्ने र सम्भव भएका ठाउँमा न्यायिकभन्दा अनुशासनात्मक उपायहरू गर्नुपर्ने कुरालाई, बन्दी बनाउने शक्तिले सुनिश्चित गर्नेछ ।

## धारा ८४

युद्धबन्दीद्वारा गरेको भनिएको खास कुनै अपराधका सम्बन्धमा, बन्दी बनाउने शक्तिको सैन्य दलको कुनै सदस्यलाई युद्धबन्दीले गरेको जस्तै कुनै खास अपराधको सिलसिलामा सो देशको प्रचलित कानुनले साधारण अदालतमा मुद्दा चलाउन स्पष्ट रुपमा अनुमति दिएको स्थितिमा बाहेक युद्धबन्दीलाई सैनिक अदालतमा मात्र मुद्धा चलाइनेछ ।

कुनै पनि परिस्थितिमा युद्धबन्दीलाई त्यस्तो अदालतमा मुद्दा चलाइने छैन जसले सामान्यतया सर्वमान्य स्वतन्त्रता र निष्पक्षताको प्रत्याभूति गर्दैन र खास गरी जसको कार्यविधिले धारा १०५ मा व्यवस्था गरिएको प्रतिरक्षाको अधिकार र साधन, अभियुक्तलाई प्रदान गर्दैन ।

## धारा ८५

कब्जा गरिनुभन्दा पहिले गरेका अपराधका निमित्त बन्दी बनाउने शक्तिको कानुन अन्तर्गत मुद्दा चलाइएका युद्धबन्दीहरूले अपराधी प्रमाणित भएमा पनि, यस महासन्धिको फाइदा प्राप्त गरिरहने छन् ।

## धारा ८६

कुनै पनि युद्धबन्दीलाई एउटै अपराधका लागि अथवा एउटै अपराधमा, एक पटकभन्दा बढी सजाय गर्न सकिनेछैन ।

## धारा ८७

कुनै पनि युद्धबन्दीलाई बन्दी बनाउने शक्तिका सैनिक अधिकारीहरू र अदालतहरूले उस्तै अपराधका लागि बन्दी बनाउने शक्तिको सैन्य दलको सदस्यका सम्बन्धमा व्यवस्था गरिएको सजायभन्दा बाहेक अन्य सजाय दिन सकिनेछैन ।

सजाय निर्धारण गर्दा बन्दी बनाउने शक्तिको अदालत अथवा अधिकारीहरूले त्यो अभियुक्त बन्दी बनाउने शक्तिको नागरिक नभएकोले, त्यस राज्यप्रति निष्ठा र नैतिकबन्धन नभएको र उसको आफ्नो इच्छा प्रतिकूल परिस्थितिको फलस्वरुप त्यस शक्तिको अधीन रहेको छ भन्ने तथ्यलाई यथासम्भव बढी मात्रामा ध्यानमा राख्नेछन् । उक्त अदालतहरू वा पदाधिकारीहरू युद्धबन्दीले उल्लंघन गरेको भनी लागेको अभियोगका लागि, तोकिएको सजाय कम गर्न स्वतन्त्र हुनेछन् र त्यसकारण तोकिएको न्यूनतम सजाय लागू गर्न बाध्य हुनेछैनन् ।

व्यक्तिले गरेको अपराधको लागि सामूहिक सजाय, शारीरिक सजाय, घाम नलाग्ने भवनमा बन्दी बनाउनु र सामान्यतया यातना तथा क्रूरताको कुनै पनि स्वरुपलाई निषेधित गरिएको छ ।

कुनै पनि युद्धबन्दीलाई बन्दी बनाउने शक्तिले उसको दर्जाबाट वञ्चित गर्न अथवा आफ्नो ब्याज लगाउनबाट रोक्न सक्नेछैन ।

## धारा ८८

अनुशासनात्मक वा न्यायिक सजाय भोगिरहेका अधिकृतहरू, आधिकारिक दर्जा नपाएका अधिकृतहरू र युद्धबन्दीको रुपमा रहेका व्यक्तिहरूलाई बन्दी बनाउने शक्तिको समान दर्जाका सैन्य दलका सदस्यहरूका लागि लागू हुने सजायभन्दा बढी कडा सजाय गरिने छैन ।

कुनै महिला युद्धबन्दीलाई उस्तै अपराधका लागि बन्दी बनाउने शक्तिका सैन्य दलका महिला सदस्यहरूलाई दिइने सजायभन्दा बढी कडा सजाय तोकिने वा दिइनेछैन अथवा सजाय भोगिरहेको समयमा बढी कडाइका साथ व्यवहार गरिनेछैन ।

कुनै महिला युद्धबन्दीलाई कुनै पनि हालतमा उस्तै अपराधका लागि बन्दी बनाउने शक्तिको सैन्य दलको पुरुष सदस्यलाई दिइने वा तोकिने सजायभन्दा बढी कडा सजाय दिइनेछैन अथवा सजाय भोगिरहेको समयमा, बढी कडाइका साथ व्यवहार गरिनेछैन ।

अनुशासनात्मक अथवा न्यायिक सजाय भोगिसकेका युद्धबन्दीहरूलाई अरु युद्धबन्दीहरूभन्दा फरक किसिमले व्यवहार गरिनेछैन ।

## २. अनुशासनात्मक कारबाहीहरू

### धारा ८९

युद्धबन्दीहरूलाई लागू हुने अनुशासनात्मक सजायहरू देहाय बमोजिम छन् :-

(१) तीस दिनभन्दा बढी नभएको अवधिको लागि धाराहरू ६० र ६२ का प्रावधानहरू अन्तर्गत युद्धबन्दीले सामान्यतया पाउने पेश्की तलवको अथवा काम गरे बापतको तलवको ५० प्रतिशतभन्दा बढी नहुने जरिवाना ।

(२) वर्तमान महासन्धिमा व्यवस्था गरिएको व्यवहारका अतिरिक्त उपलब्ध गराइएको सुविधाको कटौती ।

(३) प्रतिदिन २ घण्टाभन्दा बढी नहुने श्रम सजाय ।

(४) थुना ।

अधिकृतहरूलाई (३) अन्तर्गत उल्लिखित सजाय लागू हुनेछैन ।

कुनै पनि अवस्थामा अनुशासनात्मक सजाय अमानवीय, पाशविक वा युद्धबन्दीहरूको स्वास्थ्यको लागि हानिकारक खालको हुनेछैन ।

### धारा ९०

कुनै एउटा सजायको अवधि कुनै पनि अवस्थामा तीस दिनभन्दा बढीको हुनेछैन । अनुशासनात्मक अपराधको सुनुवाई गर्नुभन्दा अथवा अनुशासनात्मक सजाय दिनुभन्दा अघि थुनामा रहेको अवधि युद्धबन्दीका विरुद्ध सुनाइएको सजायबाट घटाइनेछ ।

युद्धबन्दीलाई सजाय सुनाउँदा, युद्धबन्दी एक साथ विभिन्न अपराधहरूका लागि आरोपित भए पनि र ती अपराधहरू परस्परमा सम्बन्धित भए वा नभए पनि माथि व्यवस्था भएको बढीमा तीस दिनभन्दा बढीको हुनेछैन ।

अनुशासनात्मक सजायको घोषणा र यसको कार्यान्वयन बीचको अवधि एक महिनाभन्दा बढी हुनेछैन । कुनै बन्दीलाई थप अनुशासनात्मक दण्ड दिएमा यी दुई मध्ये एकको अवधि दस दिन वा सोभन्दा बढी भएमा यी दुई सजायको कार्यान्वयनको बीच कम्तिमा पनि तीन दिनको अवधि बितेको हुनुपर्छ ।

### धारा ९१

यस्तो अवस्थामा युद्धबन्दी भाग्न सफल भएको मानिनेछ जब :-

(१) आश्रित शक्ति अथवा गठबन्धन शक्तिको सैन्य दलमा ऊ सामिल भएको हुन्छ,

(२) उसलाई बन्दी बनाउने शक्ति अथवा उसका सहयोगी शक्तिको नियन्त्रणमा रहेको क्षेत्र छाडेको हुन्छ,

(३) आफू आश्रित शक्तिको वा त्यसको गठबन्धन शक्तिको झण्डा फहराउने र बन्दी बनाउने शक्तिको क्षेत्रीय अधिकार भएको जलक्षेत्रमा रहेको तर बन्दी बनाउने शक्तिको नियन्त्रणमा नभएको जहाजमा सम्मिलित भएमा ।

यस धाराको अर्थमा भाग्न सफल भएका र पछि फेरि समातिएका युद्धबन्दीहरू, पहिले भागे बापत कुनै पनि सजायका भागी हुनेछैनन् ।

## धारा ९२

कुनै युद्धबन्दीले भाग्ने उद्योग गर्छ र धारा ९१ का अर्थमा भाग्ने काम सफल हुनुभन्दा पहिले नै समातिन्छ भने यस्तो अपराध बारम्बार दोहोरिएको भए पनि ऊ यस कार्यका सम्बन्धमा अनुशासनात्मक सजायको मात्र भागी हुनेछ ।

पुनः समातिएको युद्धबन्दीलाई अविलम्ब उपयुक्त सैनिक अधिकारीसमक्ष पेश गरिनेछ ।

धारा ८८ को चौथो प्रकरणमा जेसुकै लेखिएको भए तापनि, भाग्न असफल भएको परिणामस्वरुप सजाय पाएका युद्धबन्दीहरूमाथि विशेष निगरानी राख्न सकिनेछ । यस्तो निगरानीले उनीहरूको स्वास्थ्यको अवस्थालाई असर गर्नुहुँदैन युद्धबन्दी शिविरभित्र निगरानी गरिएको हुनुपर्छ र प्रस्तुत महासन्धिद्वारा उनीहरूलाई प्रदान गरिएको, कुनै पनि सुरक्षालाई दमन गरेको हुनुहुँदैन ।

## धारा ९३

भागेको अथवा भाग्ने उद्योग गरेको अवधिमा गरेको अपराधका सम्बन्धमा न्यायिक कार्यविधिद्वारा युद्धबन्दीमाथि मुद्दा चलाउँदा भाग्ने अथवा भाग्ने उद्योगको अपराध पटकपटक गरेकोलाई, अपराधको गम्भीरता बढाउने गम्भीर परिस्थितिको रुपमा लिइनेछैन ।

धारा ८३ मा उल्लिखित सिद्धान्तअनुरुप युद्धबन्दीले आफू भाग्ने कामलाई सहज बनाउने एकमात्र नियतले गरेको अपराध र जुन अपराधले ज्यू- वा ज्यानमा हानि पुऱ्याउने काम गर्दैन, जस्तै सार्वजनिक सम्पत्ति विरुद्धका अपराध, आफूलाई धनी बनाउने नियत नभएको चोरी, झुठो कागजातको तयारी वा प्रयोग सामान्य नागरिकले लगाउने लुगा लगाउने जस्ता अपराधहरूका लागि अनुशासनात्मक दण्ड मात्र दिइनेछ ।

भाग्न सहयोग गर्ने अथवा उक्साउने गर्ने अथवा भाग्न उद्योग गर्ने युद्धबन्दीहरू यस आधारमा केवल अनुशासनात्मक सजायका मात्र भागी हुनेछन् ।

## धारा ९४

यदि भागेको युद्धबन्दी पुनः समातिएमा ऊ भागेकोबारे पहिले सूचना दिइएको रहेछ भने, ऊ जुन शक्तिमाथि आश्रित छ, त्यस शक्तिलाई धारा १२२ मा वर्णित तरिकाअनुसार जानकारी दिइनेछ ।

## धारा ९५

अनुशासन विरुद्धको अपराधको अभियोग लागेको युद्धबन्दीलाई, सुनुवाई हुनुभन्दा अघि, उस्तै अपराध गरेको भनी दोष लगाइएको बन्दी बनाउने शक्तिका सैन्य दलको सदस्यलाई थुनामा राखिँदैन भने, अथवा शिविरमा सुव्यवस्था र अनुशासनका हितमा यसो गर्नु अत्यावश्यक छैन भने थुनामा राखिने छैन ।

अनुशासनका विरुद्ध गरिएको अपराधबारे फैसलाको प्रतिक्षामा युद्धबन्दीले थुनामा बिताउने अवधि पूर्ण रुपमा न्यूनतम घटाइनेछ र चौध दिनभन्दा बढी हुनेछैन ।

यस अध्यायका धारा ९७ र ९८ का प्रावधानहरू अनुशासनका विरुद्ध गरिएको अपराधको फैसलाको प्रतिक्षा गर्दै थुनामा रहेका युद्धबन्दीहरूका लागि मात्र लागू हुनेछ ।

## धारा ९६

अनुशासनका विरुद्ध हुने आपराधिक सबै काम कारबाहीको अनुसन्धान तत्काल गरिनेछ ।

अदालत र वरिष्ठ सैनिक अधिकारीहरूको क्षमतामा आँच नआउने गरी अनुशासनात्मक सजायको आदेश शिविर कमाण्डरको हैसियतमा अनुशासनात्मक अधिकार भएको अधिकृतद्वारा अथवा उसको सट्टामा काम गर्ने अधिकृत अथवा जसलाई उसले अनुशासनको कारबाहीगर्ने आफ्नो अधिकार प्रत्यायोजन गरेको छ व्यक्तिद्वारा मात्र दिन सकिनेछ ।

कुनै पनि अवस्थामा यस्तो अधिकार युद्धबन्दीलाई प्रत्यायोजन गर्न सकिने छैन अथवा युद्धबन्दीद्वारा प्रयोग हुन सक्दैन । अनुशासनात्मक सजाय सुनाउनुभन्दा अघि अभियुक्तलाई आरोपित अपराधका सम्बन्धमा यथार्थ जानकारी दिइनेछ र उसलाई, आफ्नो आचरणका सम्बन्धमा स्पष्ट गर्न र आफ्नो बचाउ गर्ने अवसर प्रदान गरिनेछ । उसलाई खास गरी साक्षीहरूलाई बोलाउने र आवश्यक भएमा योग्य दोभाषेको सेवा प्राप्त गर्ने अनुमति दिइनेछ । फैसला अभियुक्त युद्धबन्दी र युद्धबन्दीहरूको प्रतिनिधिलाई सुनाइनेछ ।

अनुशासनात्मक सजायको अभिलेख शिविर कमाण्डरद्वारा राखिनेछ र संरक्षक शक्तिका प्रतिनिधिहरूद्वारा निरीक्षणका लागि खुला रहनेछ ।

## धारा ९७

युद्धबन्दीहरूलाई कुनै पनि अवस्थामा अनुशासनात्मक सजाय दिनका लागि सुधारक कारागार जस्ता संस्थापनहरू (जेल, सुधारक काराबास, बन्दीगृह आदि) मा हस्तान्तरण गरिनेछैन ।

अनुशासनात्मक सजाय पाएकालाई राख्ने भवनहरू धारा २५ मा लेखिएबमोजिम सरसफाइको आवश्यकताअनुरुप हुनुपर्नेछ । सजाय भोगिरहेको युद्धबन्दीलाई धारा २९ बमोजिम आफूलाई सफा राख्ने अवस्थामा राख्न सक्षम पारिनेछ ।

अधिकृतहरू र सो सरहको दर्जाका व्यक्तिहरूलाई आधिकारिक दर्जा नपाएका अधिकृतहरू र जवानहरू बस्ने आवासमासँगै राखिनेछैन ।

अनुशासनात्मक सजाय भोगिरहेका महिला युद्धबन्दीहरूलाई पुरुष युद्धबन्दीहरूभन्दा छुट्टै भवनहरूमा बन्दी बनाइनेछ र उनीहरूलाई महिलाकै प्रत्यक्ष सुपरिवेक्षणमा राखिनेछ ।

## धारा ९८

अनुशासनात्मक सजायको रुपमा काराबास भोगिरहेको युद्धबन्दीले थुनामा रहेको कारणले गर्दा मात्र आवश्यक रुपमा लागू हुन नसक्ने स्थितिमा बाहेक यस महासन्धिका प्रावधानहरूको फाइदा प्राप्त गरिरहने छ । कुनै पनि हालतमा उसलाई धारा ७८ र १२६ का प्रावधानहरूको लाभबाट वञ्चित गर्न सकिनेछैन ।

अनुशासनात्मक सजाय दिइएको कुनै पनि युद्धबन्दीलाई उसको दर्जासँग सम्बन्धित विशेषाधिकारबाट वञ्चित गरिनेछैन ।

अनुशासनात्मक सजाय दिइएका युद्धबन्दीहरूलाई व्यायाम गर्न र कम्तीमा प्रतिदिन दुईघण्टा खुला हावामा बस्न, अनुमति दिइनेछ ।

अनुरोध गरेमा उनीहरूलाई दिनदिनै गरिने स्वास्थ्य निरीक्षणमा उपस्थित हुन अनुमति दिइनेछ । उनीहरूले आफ्नो स्वास्थ्यलाई आवश्यक हुने हेरचाह प्राप्त गर्नेछन् र यदि आवश्यक भएमा उनीहरूलाई शिविरको स्वास्थ्य केन्द्र अथवा अस्पतालमा स्थानान्तरण गरिनेछ ।

उनीहरूलाई पढ्न, लेख्न र त्यसरी नै चिट्ठी पठाउने र प्राप्त गर्ने अनुमति दिइनेछ । तर सजाय पूरा नहुन्जेलसम्म पार्सल र पठाइएको पैसा भने रोक्का राख्न सकिनेछ । यसबीच यस्ता वस्तुहरू

बन्दीहरूका प्रतिनिधिलाई बुझाइनेछ जसले यस्ता पार्सलहरूमा भएका नाश हुने वस्तुहरू स्वास्थ्य केन्द्रलाई हस्तान्तरण गर्नेछ ।

## ३. न्यायिक कारबाही

## धारा ९९

कुनै पनि युद्धबन्दीलाई निजले कुनै कार्य गरेको समयमा लागू भइरहेको बन्दी बनाउने शक्तिको कानुन अथवा अन्तर्राष्ट्रिय कानुनद्वारा निषेध गरिएको त्यस्ता कार्यका लागि मुद्दा चलाउन वा सजाय गर्न सकिनेछैन ।

युद्धबन्दीमाथि लगाइएको अपराध कबुल गराउन प्रेरित गर्नका निमित्त निजमाथि, नैतिक अथवा शारीरिक दबाबको प्रयोग गर्न सकिनेछैन ।

कुनै पनि युद्धबन्दीलाई आफ्नो बचाउ गर्ने र योग्य अधिवक्ता अथवा सल्लाहकारको सहयोग लिने अवसर प्रदान नगरीकन दोषी ठहऱ्याइने छैन ।

## धारा १००

बन्दी बनाउने शक्तिको कानुन अन्तर्गत मृत्युदण्ड हुने अपराधहरूको जानकारी यथासम्भव चाँडो युद्धबन्दीहरू र संरक्षक शक्तिहरूलाई दिइनेछ ।

त्यसपछि युद्धबन्दीहरू जुन शक्तिमाथि आश्रित हुन्छन् सो शक्तिको सहमतिविना अरु अपराधहरूलाई मृत्युदण्ड दिन सकिने अपराध बनाइने छैन ।

धारा ९७ को दोस्रो प्रकरणबमोजिम अभियुक्त बन्दी बनाउने शक्तिको नागरिक नभएकोले त्यस राज्यप्रति निष्ठा र नैतिकबन्धन नभएको र उसको आफ्नो इच्छाभन्दा प्रतिकूल परिस्थितिको फलस्वरुप त्यस शक्तिको अधीन रहेको छ भन्ने तथ्यप्रति अदालतको ध्यान आकर्षण नगरीकन कुनै पनि युद्धबन्दीलाई मृत्युदण्ड सुनाउन सकिनेछैन ।

## धारा १०१

यदि कुनै युद्धबन्दीलाई मृत्युदण्ड सुनाइएको छ भने धारा १०७ मा व्यवस्था भएबमोजिम, संरक्षक शक्तिले तोकिएको ठेगानामा विस्तृत जानकारी पाएको मितिबाट छ महिना भुक्तान नभएसम्म, सो सजायको कार्यान्वयन गरिनेछैन ।

## धारा १०२

यदि बन्दी बनाउने शक्तिको सैन्य दलका सदस्यहरूको हकमा जस्तै समान कार्यविधि बमोजिम उही अदालतले सजाय सुनाएको छ भने र यस बाहेक यदि यस महासन्धिका प्रावधानहरूको पालन गरिएको छ भने मात्र युद्धबन्दीलाई विधिपूर्वक सजाय गर्न सकिन्छ ।

## धारा १०३

युद्धबन्दीसँग सम्बन्धित न्यायिक छानविन, परिस्थितिले अनुमति दिएसम्म चाँडोभन्दा चाँडो गरिनेछ जसले गर्दा उसमाथिको मुद्दाको सुनुवाई चाँडोभन्दा चाँडो हुन सकोस् । मुद्दाको सुनुवाइको प्रतिक्षा गरिरहेको युद्धबन्दीलाई जबसम्म उस्तै अपराधको अभियोग लागेको बन्दी बनाउने शक्तिको सैन्य दलको सदस्यलाई थुनामा राखिदैन अथवा राष्ट्रिय सुरक्षाको हितमा यसो गर्नु अत्यावश्यक हुँदैन, तबसम्म निजलाई थुनामा राखिने छैन । कुनै पनि अवस्थामा यस्तो कैद तीन महिनाभन्दा बढी हुनेछैन ।

मुद्दाको सुनुवाईको प्रतिक्षामा युद्धबन्दीले थुनामा बिताएको अवधि उसलाई दिइएको थुनाको सजायको अवधिबाट कट्टा गरिनेछ र कुनै पनि सजाय निर्धारण गर्दा यसलाई ध्यानमा राखिनेछ ।

धारा ९७ र ९८ का प्रावधानहरू, मुद्दाको सुनुवाइको प्रतिक्षामा रहेको युद्धबन्दीलाई लागू हुनेछ ।

## धारा १०४

बन्दी बनाउने शक्तिले कुनै युद्धबन्दी विरुद्ध न्यायिक प्रक्रिया शुरु गर्ने निर्णय गरेपछि यसले संरक्षक शक्तिलाई चाँडोभन्दा चाँडो र सुनुवाई शुरु हुनुभन्दा कम्तीमा पनि तीन हप्ता पहिले जानकारी दिनेछ । तीन हप्ताको यो अवधि संरक्षक शक्तिद्वारा बन्दी बनाउने शक्तिलाई पहिलेनै दिइएको संरक्षक शक्तिको ठेगानामा सूचना पुगेको दिनबाट गणना गरिनेछ ।

उक्त सूचनामा देहायबमोजिमको जानकारी रहनेछ :-

(१) युद्धबन्दीको नाम र थर, उसको दर्जा, उसको सेना, गण, व्यक्तिगत अथवा क्रमगत संख्या, उसको जन्ममिति र यदि उसको पेशा अथवा कारोबार भए सो,

(२) बन्दी बनाइएको अथवा थुनामा राखिएको ठाउँ,

(३) लागू हुने कानुनी व्यवस्थाहरू खुलाई युद्धबन्दीमाथि लगाइने आरोप वा आरोपहरूको विस्तृत विवरण,

(४)	मुद्दा चलाउने अदालतको नामको साथै मुद्दाको सुनुवाई शुरु हुनको लागि निर्धारित मिति र ठाउँ ।

यस्तै जानकारी, बन्दी बनाउने शक्तिले बन्दीहरूका प्रतिनिधिलाई पनि दिनेछ ।

यदि सुनुवाई प्रारम्भ हुँदा, सुनुवाई शुरु हुनुभन्दा कम्तीमा पनि तीन हप्ता पहिले माथि लेखिएबमोजिमको सूचना संरक्षक शक्ति, युद्धबन्दी र बन्दीका सम्बन्धित प्रतिनिधिले प्राप्त गरेको प्रमाण पेश नगरेमा सुनुवाई हुन सक्दैन र स्थगित गर्नुपर्छ ।

## धारा १०५

युद्धबन्दीलाई कुनै एउटा बन्दी साथीको सहयोग लिने, आफूले रोजेको योग्य अधिवक्ता वा वकिलद्वारा प्रतिरक्षा गर्न पाउने, साक्षीहरूलाई बोलाउन पाउने र निजले आवश्यक ठानेमा योग्य दोभाषेको सेवा लिने अधिकार हुनेछ । सुनुवाई हुनुभन्दा पहिले उचित समयमा नै बन्दी बनाउने शक्तिद्वारा उसलाई यी अधिकारहरूबारे जानकारी दिइनेछ ।

युद्धबन्दीले चयन गर्न नसकेमा, संरक्षक शक्तिले उसको लागि एउटा अधिवक्ता अथवा वकिल उपलब्ध गराउनेछ र यस प्रयोजनका लागि निजलाई कम्तीमा पनि एक हप्ता प्राप्त हुनेछ । बन्दी बनाउने शक्तिले अनुरोध प्राप्त भएमा बचाउ गर्नका लागि योग्य व्यक्तिहरूको सूची संरक्षक शक्तिलाई दिनेछ । युद्धबन्दीद्वारा अथवा संरक्षक शक्तिद्वारा अधिवक्ता अथवा वकिलको चयन हुन नसकेमा बन्दी बनाउने शक्तिले, प्रतिरक्षा गर्न सक्षम अधिवक्ता अथवा परामर्शदाता नियुक्त गर्नेछ ।

युद्धबन्दीका तर्फबाट बचाउ गर्ने अधिवक्ता अथवा वकिललाई अभियुक्तको बचाउको लागि तयारी गर्न सुनुवाई शुरु हुनुभन्दा अघि कम्तिमा पनि दुई हप्ताको समय र आवश्यक सुविधा प्राप्त हुनेछ । उसले खास गरी स्वतन्त्रतापूर्वक बन्दीलाई भेट्न सक्नेछ र एकान्तमा निजसँग साक्षात्कार गर्न सक्नेछ । उसले बचाउका लागि युद्धबन्दी लगायत कुनै पनि साक्षीसँग कुरा गर्न सक्नेछ । उसले यस्ता सुविधाहरूको लाभ पुनरावेदन गर्ने अथवा निवेदन दिने म्याद समाप्त नभएसम्म लिन सक्नेछ ।

युद्धबन्दीमाथि लाग्ने आरोप वा आरोपहरूका साथै बन्दी बनाउने शक्तिको सशस्त्र सेनामा प्रचलित कानुनको परिणामस्वरुप अभियुक्तलाई सामान्यतया पठाउनु पर्ने सबै कागजातहरू उसले बुझ्ने भाषामा र मुद्दाको सुनुवाई हुनुभन्दा पर्याप्त समय पहिले नै अभियुक्त युद्धबन्दीलाई पठाइनेछ । युद्धबन्दीका तर्फबाट बचाउ गर्ने अधिवक्ता अथवा वकिललाई पनि उस्तै परिस्थितिमा सोही जानकारी दिइनेछ ।

संरक्षक शक्तिका प्रतिनिधिहरू, अपवादको रुपमा राष्ट्रिय सुरक्षाको हितमा बन्द कोठामा मुद्दा चलाइएको स्थितिमा बाहेक, मुद्दाको सुनुवाईमा उपस्थित हुन पाउनेछन् । यस्तो अवस्थामा बन्दी बनाउने शक्तिले संरक्षक शक्तिलाई सोहीबमोजिम जानकारी दिनेछ ।

## धारा १०६

सजाय नै रद्द गराउने अथवा संशोधन गराउने अथवा मुद्दा पुनः शुरु गराउने उद्देश्यले आफूलाई सुनाइएको सजायको सम्बन्धमा युद्धबन्दीलाई पनि पुनरावेदन गर्न अथवा निवेदन गर्ने अधिकार बन्दी बनाउने शक्तिको सशस्त्र सेनाका सदस्यहरूलाईजस्तै हुनेछ । उसलाई पुनरावेदन अथवा निवेदन गर्ने उसको अधिकार र उसले यसो गर्न पाउने समय सीमाबारे पूर्ण जानकारी दिइनेछ ।

## धारा १०७

युद्धबन्दीलाई सुनाइएको कुनै पनि सजाय अथवा फैसलाबारे संरक्षक शक्तिलाई तुरुन्तै संक्षिप्त जानकारीको रुपमा सूचित गरिनेछ जसमा सजाय रद्द गराउने अथवा मुद्दाको सुनुवाई फेरी शुरु गराउने उद्देश्यले पुनरावेदन गर्ने अधिकार निजलाई छ वा छैन भन्ने बारे पनि जनाइनेछ । त्यसरी नै यो जानकारी सम्बन्धित बन्दीहरूका प्रतिनिधिलाई पनि दिइनेछ । यदि निजको उपस्थितिमा सजाय सुनाइएको छैन भने निजले बुझ्ने भाषामा अभियुक्त, युद्धबन्दीलाई पनि यो पठाइनेछ । बन्दी बनाउने शक्तिले संरक्षक शक्तिलाई पुनरावेदनको आफ्नो अधिकार प्रयोग गर्ने अथवा नगर्ने बारे युद्धबन्दीको निर्णयको जानकारी पनि तुरुन्तै दिनेछ ।

यसका अतिरिक्त, यदि अन्तमा युद्धबन्दीलाई दोषी ठहऱ्याइयो अथवा यदि प्रथमतः उसलाई सुनाइएको सजाय मृत्युदण्ड रहेछ भने बन्दी बनाउने शक्तिले चाँडोभन्दा चाँडो संरक्षक शक्तिलाई देहायबमोजिमको विस्तृत विवरणको जानकारी पठाउनेछ :-

(१) ठहर र सजायको निश्चित भाषा,

(२) खास गरी अभियोजन तथा प्रतिरक्षाका तत्वहरूमाथि जोड दिइएको प्रारम्भिक अनुसन्धान र सुनुवाईको प्रतिवेदन,

(३) लागू हुने भएमा सजाय भुक्तान गर्ने ठाउँबारे जानकारी ।

माथिका उप-प्रकरणहरूमा उल्लिखित जानकारी संरक्षक शक्तिलाई यसले बन्दी बनाउने शक्तिलाई पहिले नै सूचित गरिएको ठेगानामा पठाइनेछ ।

## धारा १०८

विधिवत दोषी ठहऱ्याइसकेपछि, युद्धबन्दीलाई सुनाइएको सजाय बन्दी बनाउने शक्तिका सशस्त्र सैन्य दलका सदस्यहरूका हकमा जस्तै, तिनै संस्थापनहरूमा र उही अवस्थामा लागू गरिनेछ । यी अवस्थाहरू सबै परिस्थितिमा स्वास्थ्य र मानवीय आवश्यकता अनुरुप हुनुपर्छ ।

यस्तो सजाय सुनाइएकी महिला युद्धबन्दीलाई छुट्टै भवनमा र महिलाकै निगरानीमा राखिनेछ ।

स्वतन्त्रताबाट वञ्चित हुने गरी सजाय दिइएका युद्धबन्दीहरूले प्रस्तुत महासन्धिका धारा ७८ र १२६ का प्रावधानहरूको लाभ लिइरहनेछन् । यसका अतिरिक्त, उनीहरूले चिठ्ठीहरू बुझ्न र पठाउन, हरेक महिनामा कम्तीमा पनि सहायता सामग्रीको एक पोका पाउन, खुला हावामा नियमित व्यायाम गर्न, उनीहरूको स्वास्थ्यको अवस्थाले माग गरेबमोजिम उपचार प्राप्त गर्न र उनीहरूले चाहेको आध्यात्मिक सहयोग लिन पाउनेछन् । उनीहरूलाई दिन सकिने दण्डहरू धारा ८७ को तेस्रो अनुच्छेदका प्रावधानहरूबमोजिम हुनेछन् ।

## भाग ४
## कैदको समाप्ति
## खण्ड १
## सोझै स्वदेश फिर्ता र तटस्थ मुलुकहरूमा बसोबासको व्यवस्था
## धारा १०९

यस धाराको तेस्रो अनुच्छेदको प्रावधानको अधीन रही तल उल्लिखित धाराको पहिलो प्रकरण बमोजिम युद्धका पक्षहरूले युद्धबन्दीको तह र संख्याको वास्ता नगरी सिकिस्त बिरामी तथा गम्भीर रुपमा घाइते युद्धबन्दीहरूलाई, निजहरूलाई आवश्यक उपचार गरी हिँडडुल गर्न सक्ने भएपछि, आफ्नो मुलुकमा सुरक्षित फिर्ता पठाउन बाध्य हुनेछन् ।

युद्धरत अवधिमा पनि, युद्धका पक्षहरूले तल उल्लिखित धाराको दोस्रो अनुच्छेदमा निर्दिष्ट घाइते तथा बिरामी युद्धबन्दीहरूलाई सम्बद्ध तटस्थ शक्तिहरूको सहयोगमा तटस्थ मुलुकहरूमा बसोबासको लागि व्यवस्था गर्ने प्रयास गर्ने छन् । लामो समयसम्म तिनीहरूले थुनामा रहेका शारीरिक रुपमा सक्षम युद्धबन्दीहरूलाई कुनै तटस्थ मुलुकमा थुनामा राख्न वा सोझै स्वदेश फिर्ता पठाउने गरी थप सम्झौता गर्न सक्नेछन् ।

यस धाराको पहिलो अनुच्छेद अन्तर्गत आफ्नो मुलुकमा फिर्ता पठाउन लायकका कुनै पनि बिरामी वा घाइते युद्धबन्दीलाई युद्धको समयमा निजको इच्छा विपरीत फिर्ता पठाउन सकिने छैन ।

# धारा ११०

निम्नलिखितलाई सोझै स्वदेश फिर्ता पठाइनेछ :-

(१) असाध्यै घाइते वा बिरामी जसको शारीरिक र मानसिक अवस्था ज्यादै क्षीण भएको देखिन्छ ।

(२) त्यस्ता घाइते तथा बिरामी जो चिकित्सकको रायमा एक वर्षभित्र तन्दुरुस्त हुन सक्दैनन्, जसलाई उपचारको आवश्यकता छ र जसको शारीरिक वा मानसिक अवस्था ज्यादै क्षीण भएको देखिन्छ ।

(३) घाइते र बिरामी जो उपचारपछि तन्दुरुस्त भएका छन् तर जसको शारीरिक र मानसिक अवस्था स्थायी रुपमा क्षीण भएको देखिन्छ ।

निम्नलिखितलाई कुनै तटस्थ मुलुकमा बसोबास गराउन सकिनेछ :-

(१) घाइते तथा बिरामी जो घाइते भएको वा बिरामी परेको मितिले १ वर्षभित्र तन्दुरुस्त हुने सम्भावना छ र जसलाई तटस्थ मुलुकमा उपचार गराउँदा निश्चित र छिटो स्वास्थ्यलाभको बढी सम्भावना छ ।

(२) त्यस्ता युद्धबन्दीहरू जसको चिकित्सकको रायमा लगातार बन्दी बनाइएको कारणबाट शारीरिक तथा मानसिक अवस्था गम्भीर खतरामा छ, तर जसलाई तटस्थ राष्ट्रमा स्थानान्तरण गर्दा यसमा केही कमी आउन सक्छ ।

कुनै तटस्थ राष्ट्रमा बसोबास गराइएका युद्धबन्दीहरूले निजहरूलाई आफ्नो मुलुकमा फिर्ता गर्न पूरा गर्नुपर्ने शर्तहरू र त्यस्तै तिनीहरूको हैसियतबारे सम्बन्धित पक्षहरूसँग सम्झौता गरी तय गर्नुपर्नेछ । सामान्यतया तटस्थ राष्ट्रमा बसोबास गराइएका र तलका श्रेणीहरूमा पर्ने युद्धबन्दीहरूलाई स्वदेश फिर्ता गर्नुपर्छ :-

(१) जसको स्वास्थ्यको हालत बिग्रिएको छ जसले गर्दा सोझै स्वदेश फिर्ताको शर्त पूरा हुन्छ,

(२) जसको उपचारपछि पनि मानसिक वा शारीरिक शक्ति असाध्यै क्षीण रहन्छ ।

सोझै स्वदेश फिर्ता गर्ने वा तटस्थ राष्ट्रमा बसोबास गराउने असमर्थता वा बिरामीको मामिलाहरू निश्चय गर्नेबारे संघर्षरत पक्षहरूका बीच कुनै विशेष सम्झौता सम्पन्न नभएमा यस्ता मामिलाहरू प्रस्तुत महासन्धिको परिशिष्टमा उल्लिखित घाइने तथा बिरामी युद्धबन्दीहरूलाई सोझै स्वदेश फिर्ता गर्ने र तटस्थ राष्ट्रहरूमा पठाउनेसम्बन्धी नमुना सम्झौता र संयुक्त चिकित्सा आयोगहरूको नियम बमोजिम समाधान गर्नुपर्नेछ ।

## धारा १११

बन्दी बनाउने मुलुक, युद्धबन्दीहरू आश्रित भएको मुलुक तथा यी दुई शक्तिहरू बीच सहमती भएको एउटा तटस्थ शक्तिले लडाइँ समाप्त नभएसम्म युद्धबन्दीहरूलाई तटस्थ मुलुकको क्षेत्रभित्र थुनामा राख्नेबारे सम्झौता गर्न प्रयास गर्नेछन् ।

## धारा ११२

लडाइँ प्रारम्भ भएपछि बिरामी तथा घाइते युद्धबन्दीहरूलाई जाँच गर्न र तिनीहरूको विषयमा सम्पूर्ण उपयुक्त निर्णय गर्नको लागि संयुक्त चिकित्सा आयोगहरू गठन गरिनेछ। यी आयोगहरूको गठन, कर्तव्य र संचालन प्रस्तुत महासन्धिको परिशिष्टमा उल्लिखित नियमका प्रावधानहरू बमोजिम हुनेछ ।

तथापि थुनामा राख्ने पक्षको चिकित्सा अधिकारीको रायअनुसार प्रष्टतः सिकिस्त बिरामी वा घाइते भएका युद्धबन्दीहरूलाई संयुक्त चिकित्सा आयोगद्वारा गरिने जाँचविना नै तिनीहरूको मुलुकमा फिर्ता पठाउन सकिनेछ ।

## धारा ११३

थुनामा राख्ने पक्षको चिकित्सा अधिकारीद्वारा तोकिएका व्यक्तिहरू बाहेक तल उल्लिखित श्रेणीहरूमा पर्ने घाइने वा बिरामी युद्धबन्दीहरूलाई माथि उल्लिखित धारामा व्यवस्थित संयुक्त चिकित्सा आयोगसमक्ष आफ्नो स्वास्थ्य जाँच गराउन आफूलाई प्रस्तुत गर्ने अधिकार हुनेछ ।

(१) चिकित्सा वा शल्य चिकित्सकद्वारा प्रस्तावित घाइते र बिरामी जो समान राष्ट्रियताको छ वा उक्त बन्दीहरू आश्रित रहेको युद्धरत पक्षसँग आवद्ध राष्ट्रको नागरिक छ र जसले शिविरमा आफ्ना क्रियाकलापहरू सञ्चालित गरेको छ ।

(२) बन्दीहरूको प्रतिनिधिद्वारा प्रस्तावित घाइते तथा बिरामी ।

(३) आफू आश्रित रहेको शक्ति वा उक्त शक्तिद्वारा विधिवत मान्यता प्राप्त र बन्दीहरूलाई सहयोग गरिरहेको कुनै संस्थाद्वारा प्रस्तावित घाइते र बिरामीहरू ।

तथापि, माथि उल्लिखित तीनओटा श्रेणीमा नपर्ने युद्धबन्दीहरूसंयुक्त चिकित्सा आयोगद्वारा जाँच गराउनको लागि आफूलाई पेश गर्न सक्नेछन् तर माथिको श्रेणीमा तोकिएकाहरूलाई जाँच गरिसकेपछि मात्र निजहरूलाई जाँच गरिनेछ ।

जाँचको लागि संयुक्त चिकित्सा आयोगसमक्ष उपस्थित भएका युद्धबन्दीहरूको जस्तै समान राष्ट्रियताका चिकित्सक वा शल्य चिकित्सक, त्यस्तै ती युद्धबन्दीहरूको प्रतिनिधिसमेतलाई स्वास्थ्य परीक्षण गर्ने समयमा उपस्थित हुन अनुमति दिइनेछ ।

## धारा ११४

आफैंले आफैंलाई चोटपटक लगाएको अवस्थामा बाहेक दुर्घटनामा परेका युद्धबन्दीहरूलाई यस महासन्धिको प्रावधान बमोजिम स्वदेश फिर्ता गर्न वा तटस्थ मुलुकमा पठाउने सुविधा प्राप्त हुनेछ ।

## धारा ११५

अनुशासनात्मक सजाय पाएका कुनै पनि युद्धबन्दीलाई जो स्वदेश फिर्ता गर्ने वा तटस्थ राष्ट्रमा बसोबास गराउन योग्य छ, उसले आफ्नो सजाय भुक्तान गरेको छैन भन्ने तर्कको आधारमा रोकी राख्न पाइनेछैन ।

बन्दी बनाउने शक्तिले मञ्जुर गरेमा कारबाहीको अन्त्य वा सजाय भुक्तान हुनु भन्दा अगावै न्यायिक अभियोजनको सिलसिलामा वा दोषी ठहर भएको कारणले थुनामा रहेका युद्धबन्दीहरू, जसलाई स्वदेश फिर्ता गर्न वा कुनै तटस्थ मुलुकमा बसोबासका लागि प्रस्तावित गरिएको छ, यस्ता उपायहरूबाट लाभान्वित हुन सक्छन् ।

संघर्षरत पक्षहरूले कारबाही समाप्त नभएसम्म वा सजाय भुक्तान नभएसम्म कैदमा राख्नुपर्ने व्यक्तिहरूको नाम एकअर्कालाई सूचित गर्नेछन् ।

## धारा ११६

थुनामा राख्ने पक्षको सीमानाबाट युद्धबन्दीलाई स्वदेश फिर्ता गर्न वा तटस्थ राष्ट्रमा पठाउन लाग्ने खर्च युद्धबन्दीहरू आश्रित भएको मुलुकले व्यहोर्नु पर्नेछ ।

## धारा ११७

स्वदेश फिर्ता गरिएको कुनै पनि व्यक्तिलाई सक्रिय सैनिक सेवामा बहाल गर्न सकिनेछैन ।

## खण्ड २

## लडाइँ समाप्त भएपछि युद्धबन्दीहरूको रिहाइ र स्वदेश फिर्ता

### धारा ११८

सक्रिय लडाइँ बन्द भएपछि बिना कुनै ढिलासुस्ती युद्धबन्दीहरूलाई मुक्त वा स्वदेश फिर्ता गरिनेछ ।

युद्धरत पक्षहरूबीच लडाइँ बन्द गर्नेबारे भएको सम्झौतामा माथि उल्लिखित प्रकृतिका शर्तहरूको अभाव भएमा वा यस्तो सम्झौता नभएमा बन्दी बनाउने शक्तिले अघिल्लो अनुच्छेदहरूमा निर्धारित सिद्धान्तहरू अनुरुप आफैले स्वदेश फिर्ता पठाउने योजना, विना विलम्ब तयार गर्ने र लागू गर्नेछ ।

दुबै अवस्थाहरूमा अवलम्बन गरिएका उपायहरू युद्धबन्दीहरूको जानकारीमा ल्याइनेछ ।

सबै परिस्थितिमा युद्धबन्दीहरूलाई स्वदेश फिर्ता गर्न लाग्ने खर्च बन्दी बनाउने पक्ष र बन्दी आश्रित भएको पक्षबीच समान रुपमा भाग लगाइनेछ । यो विनियोजन निम्न आधारमा गरिनेछ ।

(क) यदि दुबै पक्षराष्ट्रहरूका सीमा जोडिएका छन् भने युद्धबन्दीहरू आश्रित रहेको पक्षले उनीहरूलाई बन्दी बनाउने शक्तिको सीमानाबाट स्वदेश फर्काउँदा खर्च व्यहोर्नेछ ।

(ख) यदि दुईटै राष्ट्रहरूको सीमा जोडिएको छैन भने बन्दी बनाउने पक्षले आफ्नो क्षेत्रभित्र सकेसम्म आफ्नो सीमानासम्म वा युद्धबन्दी आश्रित भएको पक्षको भूमिमा जाने नजिकको बन्दरगाहमा पुग्ने सम्मको युद्धबन्दीहरूको परिवहन सम्बन्धी खर्च व्यहोर्नुपर्नेछ । सम्बन्धित पक्षहरूले स्वदेश फिर्ता गर्दा लाग्ने बाँकी खर्च समान रुपमा परस्परमा बाँड्न सहमति गर्नेछन् । यस सम्झौताको सम्पादनको कारणले कुनै पनि हालतमा युद्धबन्दीहरूको स्वदेश फिर्तामा गरिने कुनै ढिलाईलाई उचित मानिने छैन ।

### धारा ११९

स्वदेशमा फिर्ता गर्ने काम, प्रस्तुत महासन्धिका धारा ४६ देखि धारा ४८ सम्म उल्लिखित युद्धबन्दीहरूलाई स्थानान्तरण गर्ने अवस्थाहरू जस्तै अवस्थाहरूमा कार्यान्वयन गरिनेछ र त्यसो गर्दा धारा ११८ का प्रावधानहरू तथा निम्नलिखित प्रकरणका व्यवस्थाहरूलाई समेत अनुशरण गरिनेछ ।

स्वदेश फिर्ता गर्दा धारा १८ अन्तर्गत युद्धबन्दीहरूबाट महत्वपूर्ण सामान जफत गरिएको भएमा र थुनामा राख्ने मुलुकको मुद्रामा सटही नभएको कुनै विदेशी मुद्रा भएमा निजहरूलाई पूर्वावस्थामा

नै फिर्ता गरिनेछ । बहुमूल्य सामान र विदेशी मुद्रा जुनसुकै कारणबाट युद्धबन्दीहरूलाई स्वदेश फर्काउँदा फिर्ता बुझाइएको छैन भने त्यसलाई धारा १२२ बमोजिम गठित सूचना कार्यालयमा चलान गर्नुपर्नेछ ।

युद्धबन्दीहरूलाई निजहरूका व्यक्तिगत सामानहरू र निजहरूलाई प्राप्त भएका पत्रव्यवहार र पुलिन्दाहरू आफूसँग लान अनुमति दिइनेछ । स्वदेश फिर्ताका अवस्थाहरूले आवश्यक ठहऱ्याएको खण्डमा यस्ता झिटीगुण्टाको तौल हरेक बन्दीले उचित तरिकाले बोक्न सक्ने हदसम्म सीमित गर्न सकिनेछ । हरेक बन्दीले सबै अवस्थामा कम्तीमा पच्चीस किलोग्राम सामान आफूसँग लैजाने अधिकार प्राप्त गर्नेछन् ।

स्वदेश फिर्ता गर्न लागिएको बन्दीको अन्य व्यक्तिगत सामानको जिम्मा बन्दी बनाउने पक्षलाई दिइनेछ, जसले परिवहन र तोकिएको खर्चको भुक्तानीका शर्तहरू खुलाई, यसबारे बन्दीहरू आश्रित रहेको पक्षसँग सम्झौता गरेपछि यथाशिघ्र ती सामान निजलाई पठाउनेछ ।

अपराधको अभियोग लगाइएका फौजदारी कारबाही विचाराधिन रहेको युद्धबन्दीलाई उक्त कारबाही समाप्त नभएसम्म र आवश्यक भए तोकिएको सजाय भोगी नसकेसम्म रोक्न सकिनेछ । आरोपित कसुर प्रमाणित भइसकेका युद्धबन्दीहरूको हकमा पनि सोही नियम लागू हुनेछ ।

युद्धरत पक्षहरूले यसरी कारबाही समाप्त नभइसकेका वा सजाय भुक्तान गरी नसकेका कारणले रोकिएका युद्धबन्दीहरूको नाम एक आपसमा आदान प्रदान गर्नेछन् ।

युद्धरत पक्षहरूको आपसी सम्झौताद्वारा तितरबितर भएका युद्धबन्दीहरूलाई खोजतलास गर्ने र तिनीहरूलाई सकेसम्म छिटो स्वदेश फिर्ता गर्ने प्रयोजनका लागि आयोग गठन गरिनेछ ।

## खण्ड ३
## युद्धबन्दीहरूको मृत्यु
### धारा १२०

युद्धबन्दीहरूका इच्छापत्रहरू उनीहरूको आफ्नो जन्म भएको मुलुकको कानुनका शर्तहरूलाई पूरा गर्ने गरी तयार गरिनेछन् जसले बन्दी बनाउने शक्तिलाई, यस सम्बन्धी आवश्यकताहरूबारे सूचित गर्न कदम उठाउनेछ । युद्धबन्दीको अनुरोधमा र मृत्युपछि सबै अवस्थामा सो इच्छापत्र ढिलाई नगरीकन संरक्षक शक्तिलाई पठाइनेछ, यस इच्छापत्रको प्रमाणित एकप्रति केन्द्रीय निकायमा पठाइनेछ ।

युद्धबन्दीको रुपमा रहँदा, मृत्यु भएका सबै व्यक्तिहरूको यस महासन्धिको अनुसूची बमोजिमको ढाँचामा मृत्यु प्रमाणपत्र वा जिम्मेवार अधिकारीद्वारा प्रमाणित गरिएको सूचीलाई यथाशक्य छिटो,

धारा १२२ बमोजिम स्थापना गरिएको युद्धबन्दी सूचना कार्यालयमा पठाइनेछ । मृत्यु प्रमाणपत्रहरू वा प्रमाणित सूचीहरूले धारा १७ को तेस्रो प्रकरणमा निर्दिष्ट गरे बमोजिम परिचयको विवरणका साथै मृत्युको समय र ठाउँ, मृत्युको कारण, लाश गाडेको समय र ठाउँ तथा चिहान ठम्याउन सकिने आवश्यक विवरणहरू पनि खुलाउनु पर्नेछ ।

युद्धबन्दीको लाश गाड्ने वा दाहसंस्कारको काम गर्नुभन्दा पहिले मृत्यु प्रमाणित गर्न र प्रतिवदेन तयार गर्न र आवश्यक भए सनाखत गर्न डाक्टरी परीक्षण गरिनेछ ।

थुनामा राख्ने अधिकारीहरूले हिरासतमा रहँदा मृत्युभएका युद्धबन्दीहरूका शवहरूलाई सम्मानपूर्वक, सम्भव भएसम्म निजहरूको धार्मिक परम्परा र रीतिअनुसार, गाडिने र तिनीहरूको चिहानको सम्मान गर्ने, उपयुक्त तरिकाले स्याहार सम्भार गर्ने र पछि पत्ता लाग्ने गरी चिन्हित गर्नेबारे सुनिश्चित गर्ने छन् । सम्भव भएसम्म उही शक्तिमाथि आश्रित रहेका मृतक युद्धबन्दीहरूलाई एकै ठाउँमा गाडिनेछ ।

सामूहिक चिहान प्रयोग गर्नुपर्ने अनिवार्य अवस्थामा बाहेक मृतक युद्धबन्दीहरूलाई छुट्टाछुट्टै चिहानमा गाड्नु पर्नेछ । मृतकको लाश स्वास्थ्यको जरुरी कारणले, धर्मको वा उसको घोषित इच्छा अनुसार जलाइनेछ । लाश जलाइएको अवस्थामा सोको तथ्य र कारण, मृतकको मृत्यु प्रमाणपत्रमा उल्लेख गर्नुपर्दछ ।

मृतकहरूको चिहान जहिले पनि पत्ता लगाउनु सकियोस् भन्ने हेतुले शव गाडेका र चिहानका सम्पूर्ण विवरणहरूबारे बन्दी बनाउने शक्तिद्वारा स्थापना गरिएको चिहान दर्ता केन्द्रमा अभिलेख राखिनेछ । चिहानहरूको सूची र चिहानमा वा अन्यत्र गाडिएका मृतकहरूको विवरण युद्धबन्दी आश्रित भएको पक्षलाई पठाइनेछ । यी चिहानहरूको हेरचाहको र पछि शवहरूलाई यदि अन्यत्र सारेमा सो सम्बन्धी विवरणको जिम्मेवारी उक्त भू-भागमाथि नियन्त्रण राख्ने शक्तिमा रहनेछ । यदि उक्त शक्ति यस महासन्धिको एउटा पक्ष रहेछ भने यी व्यवस्थाहरू मृतकको गृह मुलुकका इच्छा अनुसार विसर्जन नगरेसम्म चिहान दर्ता सेवामा राखिएको अस्तुहरूको हकमा पनि लागू हुनेछन् ।

## धारा १२१

कुनै पनि युद्धबन्दीको मृत्यु वा गम्भीर घाउचोट पाले, अर्को युद्धबन्दी वा अन्य व्यक्तिको कारणबाट भएको रहेछ वा त्यस्तो शंका गरिएको छ, त्यस्तो मृत्युको कारण थाहा छैन भने सोबारे बन्दी बनाउने शक्तिद्वारा तत्कालै औपचारिक छानविन गरिनु पर्दछ ।

यस कुराको सूचना संरक्षक शक्तिलाई तत्काल दिनुपर्छ। साक्षीहरूसँग, त्यसमा पनि विशेष रुपमा युद्धबन्दीहरूसँग, बयान लिइनेछ र सो कथन समेतलाई समावेश गरी संरक्षक पक्षलाई प्रतिवेदन पठाइनेछ।

यदि सो छानविनबाट एक वा धेरै व्यक्तिहरू दोषी देखिएमा बन्दी बनाउने शक्तिले जिम्मेवार व्यक्ति वा व्यक्तिहरूको विरुद्ध मुद्दा चलाउनको लागि आवश्यक सबै कदम चाल्नेछ।

## भाग ५
## युद्धबन्दीहरूका लागि सूचना कार्यालय र सहायता गर्ने संस्थाहरू
### धारा १२२

संघर्ष प्रारम्भ भएपछि र कब्जामा परेको सबै अवस्थाहरूमा, प्रत्येक युद्धरत पक्षले आफ्नो नियन्त्रणमा रहेका युद्धबन्दीहरूको लागि एउटा सूचना कार्यालयको स्थापना गर्नेछ। तटस्थ वा युद्धमा भाग नलिएका शक्तिहरूले यस महासन्धिको धारा ४ मा निर्दिष्ट कुनै एक श्रेणीमा पर्ने व्यक्तिहरूलाई, आफ्नो भू-भागभित्र प्राप्त गरेको भए, यी व्यक्तिहरूको लागि समेत, माथि लेखिए जस्तै एक सूचना कार्यालयको स्थापना गर्नु पर्नेछ। सम्बन्धित शक्तिले यस्तो युद्धबन्दी सूचना कार्यालयको प्रभावकारी कार्यान्वयन सुनिश्चित गर्न, यसलाई आवश्यक कार्यालय राख्नका लागि स्थान, उपकरण र कर्मचारीहरूको उपलब्धता सुनिश्चित गर्नेछ। यस कार्यालयमा प्रस्तुत महासन्धीको युद्धबन्दीहरूको कामबारे चर्चा गर्ने भागमा उल्लिखित शर्तहरूको परिधिभित्र रहेर, यस्तो कार्यालयमा युद्धबन्दीहरूलाई रोजगारी दिने स्वतन्त्रता रहनेछ।

प्रत्येक युद्धरत पक्षले यस धाराका अनुच्छेदहरू चार, पाँच र छ मा उल्लेख भएबमोजिम धारा ४ अनुसारको कुनै वर्गीकरणमा पर्ने उसको नियन्त्रणमा परेको कुनै शत्रु व्यक्तिको बारेमा यथासक्य चाँडो आ-आफ्नो सूचना कार्यालयलाई सूचना दिनेछ। तटस्थ वा युद्धमा भाग नलिएका शक्तिहरूले समेत यस्तो वर्गीकरणभित्र पर्ने आफ्नो भू-भागभित्र प्राप्त गरेको व्यक्तिहरूको हकमा त्यस्तै कारवाही गर्नेछन्।

सूचना कार्यालयले माथि लेखिए बमोजिमको सूचना संरक्षक शक्तिहरूको मध्यस्थमार्फत र त्यस्तै धारा १२३ ले व्यवस्था गरेबमोजिमको केन्द्रीय निकायमार्फत जति सक्दो चाँडो पुग्ने साधनबाट तुरुन्त सम्बन्धित शक्तिहरूमा पठाउनेछ।

यस्तो सूचनाले गर्दा सम्बन्धित नजिकको नातेदारहरूलाई तुरुन्त सल्लाह दिन सम्भव हुनेछ। धारा १७ को परिधिभित्र रही युद्धबन्दीको बारेमा सूचना दिँदा हरेक युद्धबन्दीको नाम, थर, दर्जा, सैनिक, पल्टन, वैयक्तिक वा श्रेणी नम्बर, पूर्ण जन्ममिति र जन्मस्थान, उ आश्रित रहेको शक्तिको बारेमा सूचना, बाबुको नाम, आमाको विवाह हुनुभन्दा अगाडिको नाम, उसको बारेमा सूचना दिनुपर्ने

व्यक्तिको नाम र ठेगाना र युद्धबन्दीहरूलाई पत्राचार गर्ने ठेगाना जस्ता सूचना कार्यालयलाई प्राप्त भएसम्मका सबै कुराहरू खुलाई सूचना दिनुपर्नेछ।

सूचना कार्यालयले युद्धबन्दीहरूको स्थानान्तरण, स्वदेश फिर्ता, पलायन, अस्पताल भर्ना र मृत्युबारे सम्बन्धित सूचना विभिन्न विभागहरूबाट प्राप्त गर्नेछ र माथिको तेस्रो अनुच्छेदमा लेखिएबमोजिम यस्तो सूचना पठाउने काम गर्नेछ।

त्यस्तै, सिकिस्त बिरामी वा गम्भीर घाइते युद्धबन्दीहरूको शारीरिक अवस्थाको बारेमा सम्भव भएसम्म, प्रत्येक हप्ता नियमित रुपमा सूचना पठाइनेछ।

बन्दी अवस्थामा मृत्यु भएका युद्धबन्दीहरू लगायत युद्धबन्दीहरू सम्बन्धमा कार्यालयमा पठाइएका सबै सोधपुछको जवाफ दिनु, सूचना विभागको जिम्मेवारी हुनेछ, मागिएको कुनै जानकारी आफूसँग नभएमा सो प्राप्त गर्नको लागि यसले आवश्यक कुनै पनि सोधपुछ गर्न सक्नेछ।

कार्यालयबाट पठाइने सबै किसिमका लिखित जानकारीलाई हस्ताक्षर वा छापद्वारा प्रमाणित गरिनेछ।

बन्दी बनाउने शक्तिको मुद्रामा भन्दा फरक मुद्रामा रहेको रकम र नजिकका नातेदारलाई महत्वपूर्ण हुने कागजातहरू समेतका बहुमूल्य व्यक्तिगत सामानहरूलाई जो स्वदेश फिर्ता भएका वा थुनाबाट मुक्त भएका वा थुनाबाट भागेका वा मृत्यु भएका युद्धबन्दीहरूद्वारा छाडिएका रहेछन् भने, सूचना कार्यालयले जम्मा गर्ने जिम्मेवारी पाउनेछ र उक्त बहुमूल्य सामानहरू सम्बन्धित शक्तिहरूलाई पठाउनेछ । यस्ता सामग्रीको पूर्व सूचीसहित कार्यालयले लाहाछाप लागेका पुलिन्दामा सामग्रीको मालिक भएको व्यक्तिको परिचय सम्बन्धी प्रष्ट र पूर्ण विवरण संलग्न गरी पठाउनेछ । यस्ता युद्धबन्दीहरूका अन्य व्यक्तिगत सामानहरू सम्बन्धित युद्धरत पक्षहरू बीच भएको सहमतिको परिधिभित्र रही पठाउने पर्नेछ।

## धारा १२३

एउटा तटस्थ राष्ट्रमा केन्द्रीय युद्धबन्दीहरू सम्बन्धी सूचना निकाय गठन गरिनेछ । रेडक्रसको अन्तर्राष्ट्रिय समितिले आवश्यक देखेमा सम्बन्धित पक्षहरूलाई त्यस्तो निकायको गठनबारे प्रस्ताव राख्न सक्नेछ।

उक्त निकायको काम युद्धबन्दीहरूको सम्बन्धमा आधिकारिक वा व्यक्तिगत माध्यमबाट प्राप्त हुन सक्ने सूचना संकलन गर्नु र उक्त सूचनालाई सकेसम्म छिटो युद्धबन्दीहरूको जन्म मुलुक वा निजहरू आश्रित भएको मुलुकमा पठाउनु हुनेछ । यसले यस्तो सूचना पठाउन संघर्षरत पक्षहरूबाट सम्पूर्ण सुविधाहरू प्राप्त गर्नेछ।

उच्च संविदाकारी पक्षहरू र खास गरेर केन्द्रीय निकायका सेवाहरूबाट लाभान्वित हुने नागरिकहरूको राष्ट्रलाई उक्त निकायलाई आवश्यक पर्ने आर्थिक सहयोग प्रदान गर्नका लागि अनुरोध गरिन्छ ।

उपरोक्त प्रावधानहरूलाई रेडक्रसको अन्तर्राष्ट्रिय समिति वा धारा १२५ मा व्यवस्था गरिएको सहायता कार्य गर्ने संस्थाहरूको मानवीय क्रियाकलापहरूलाई बन्देज गर्ने गरी कुनै पनि तरिकाले व्याख्या गरिनेछैन ।

## धारा १२४

राष्ट्रिय सूचना कार्यालय र केन्द्रीय सूचना निकायलाई निःशुल्क हुलाक सेवा प्राप्त हुनेछ । त्यसै गरी धारा ७४ मा उल्लिखित सबै छुटहरू प्राप्त हुनेछन् र सम्भव भएसम्म टेलिग्राफ शुल्कमा छुट हुनेछ वा सकेसम्म कम दर तिर्नुपर्दछ ।

## धरा १२५

उनीहरूको सुरक्षा सुनिश्चित गर्न अथवा जायज आवश्यकता पूरा गर्न बन्दी बनाउने शक्तिले अत्यावश्यक ठानिएका उपायहरूको अधीन रही धार्मिक संगठनहरूका, सहायता कार्य गर्ने संस्थाहरू अथवा युद्धबन्दीहरूलाई सहयोग पुऱ्याउने अन्य कुनै पनि संगठनका प्रतिनिधिहरूले आफ्ना लागि र उनीहरूका विधिवत् खटाइएका संस्थाका लागि बन्दीहरूलाई भेट्ने, धार्मिक, शैक्षिक र मनोरञ्जनात्मक प्रयोजनका लागि, कुनै पनि स्रोतबाट प्राप्त सहायता सामग्री र वस्तु वितरण गर्ने र शिविरभित्र उनीहरूको फुर्सदको समयलाई सदुपयोग गर्न उनीहरूलाई सहयोग गर्ने कार्यमा बन्दी बनाउने शक्तिहरूबाट आवश्यक सम्पूर्ण सुविधाहरू प्राप्त गर्नेछन् । यस्ता संस्था अथवा संगठनहरू बन्दी बनाउने शक्तिको भू-भागमा अथवा अन्य कुनै मुलुकमा गठन गर्न सकिने छन् अथवा तिनको अन्तर्राष्ट्रिय प्रकृति पनि हुन सक्नेछ ।

बन्दी बनाउने शक्तिले आफ्नो सुपरीवेक्षण अन्तर्गत आफ्नो भू-भागमा गतिविधिको संचालन गर्न अनुमति प्राप्त प्रतिनिधिहरूका र संस्था र संगठनहरूको संख्या सीमित गर्न सक्नेछ । तर यस शर्तमा कि, यस्तो सीमाले सबै युद्धबन्दीहरूको लागि पर्याप्त सहायताको प्रभावकारी सञ्चालनमा बाधा पुऱ्याउने छैन ।

यस क्षेत्रमा रेडक्रसको अन्तर्राष्ट्रिय समितिको विशेष हैसियतको सधैं कदर र सम्मान गरिनेछ ।

माथि लेखिएबमोजिमको प्रयोजनका निमित्त भएका, सहायता सामग्री वा वस्तु युद्धबन्दीहरूलाई हस्तान्तरण गर्नासाथ अथवा त्यसको लगत्तै बन्दीहरूका प्रतिनिधिद्वारा हस्ताक्षरित हरेक पटक सामान बुझेको भरपाई, सो सामान पठाउने सहयोगी संस्था वा संगठनलाई पठाइनेछ । सोही

समयमा यी सामानहरू प्राप्त गरेको भरपाई बन्दीहरूको सुरक्षाका लागि जिम्मेवार प्रशासनिक अधिकारीहरूले दिनेछन् ।

## भाग ६

## महासन्धिको कार्यान्वयन

## खण्ड १

## सामान्य प्रावधानहरू

### धारा १२६

संरक्षण गर्ने शक्तिका प्रतिनिधिहरू वा दूतहरू युद्धबन्दीहरू रहे भएका जुनसुकै ठाउँ, विशेषगरी थुना, कैद र श्रम गर्ने ठाउँहरूमा जान अनुमति पाउनेछन् र युद्धबन्दीहरू रहेको सबै भवनहरूमा, यिनीहरूलाई पहुँच प्राप्त हुनेछ । यिनीहरू स्थानान्तरण गरिने युद्धबन्दीहरूको प्रस्थान, यात्रा र आगमनका ठाउँमा समेत जान पाउँछन् । यिनीहरूले आफैँले वा दोभाषेको सहायता लिएर, विना साक्षी, युद्धबन्दीहरू तथा खास गरेर युद्धबन्दीहरूका प्रतिनिधिहरूसँग अन्तरवार्ता समेत लिन सक्नेछन् ।

संरक्षण गर्ने शक्तिका प्रतिनिधिहरू तथा दूतहरूले आफूले भ्रमण गर्ने ठाउँहरू छनौट गर्न पूर्ण स्वतन्त्र हुनेछन् । यस्ता भ्रमणहरूको अवधि र पटकमा कुनै रोक लगाइने छैन । अत्यावश्यक सैनिक जरुरतको कारणले र त्यो पनि अपवादात्मक र अस्थायी उपायको रुपमा बाहेक, भ्रमणहरूलाई प्रतिबन्धित गर्न सकिनेछैन ।

बन्दी बनाउने शक्ति र युद्धबन्दी आश्रित रहेको शक्ति, यदि आवश्यक भएमा, यस्ता भ्रमणको समयमा युद्धबन्दीहरूका सहदेशबाशीहरूलाई पनि भाग लिन अनुमति दिनुपर्छ भनी सहमत हुन सक्नेछन् ।

अन्तर्राष्ट्रिय रेडक्रस समितिका प्रतिनिधिहरूले समेत सोही विशेषधिकार उपभोग गर्न पाउनेछन् । यस्ता प्रतिनिधिहरूको नियुक्तिलाई भेट्नु पर्ने युद्धबन्दीहरूलाई बन्दी बनाउने शक्ति समक्ष अनुमोदनको लागि पेश गरिनेछ ।

### धारा १२७

उच्च संविदाकारी पक्षहरूले युद्धको समयमा जस्तै शान्तिको समयमा पनि वर्तमान महासन्धिको मुलपाठलाई जतिसक्दो बृहत रुपमा आफ्ना देशहरूमा प्रचारप्रसार गर्न र विशेष गरी सैनिक बल र आम नागरिकले यस महासन्धिको सिद्धान्तबारे जानकारी हुने गरी सैनिक र नागरिक शिक्षाको पाठ्यक्रममा अध्ययनको लागि समावेश गर्न जिम्मेवार लिएका छन् ।

कुनै पनि सैनिक वा अन्य अधिकारीहरू जसले युद्धको समयमा युद्धबन्दीहरूको सम्बन्धमा जिम्मेवारी लिन्छन्, महासन्धिको मूलपाठलाई आफ्नो साथमा राख्नु पर्दछ र यसका प्रावधानहरूबारे विशेष रुपमा जानकारी लिनुपर्दछ ।

## धारा १२८

उच्च संविदाकारी पक्षहरूले वर्तमान महासन्धिको आधिकारिक अनुवाद तथा यसको कार्यान्वयन सुनिश्चित गर्न तिनीहरूले अबलम्बन गर्न सक्ने कानुन र नियमहरूबारे एक अर्कालाई स्वीस संघीय परिषद मार्फत र लडाईंको समयमा संरक्षक शक्तिहरू मार्फत सूचित गर्नेछन् ।

## धारा १२९

उच्च संविदाकारी पक्षहरू अनुगामी धारामा परिभाषित वर्तमान महासन्धिको कुनै पनि गम्भीर उल्लंघनको कार्य गर्ने वा सो गर्न आदेश दिने व्यक्तिहरूका लागि प्रभावकारी दण्डको व्यवस्था गर्न आवश्यक पर्ने कुनै पनि कानुन निर्माण गर्न जिम्मेवारी लिएका छन् ।

यस्तो गम्भीर उल्लंघन गरेको वा गर्ने आदेश दिएको आरोप लागेको व्यक्तिलाई खोज्नु र राष्ट्रियताको भेदभाव नगरी त्यस्ता व्यक्तिहरूलाई आफ्नो अदालत समक्ष उभ्याउनु, हरेक उच्च संविदाकारी पक्षको दायित्व हुनेछ । यदि यसले चाहेमा, यस्ता व्यक्तिहरूलाई मुद्दा चलाउनको लागि आफ्नो देशको कानुनी प्रावधान अनुसार अर्को उच्च संविदाकारी पक्ष समक्ष हस्तान्तरण गर्न सक्नेछ, तर त्यस्तो उच्च संविदाकारी पक्षले प्रथम दृष्टिमा ग्राह्य मुद्दा बनाएको हुनुपर्दछ ।

हरेक उच्च संविदाकारी पक्षले अनुगामी धारामा परिभाषित गम्भीर उल्लंघन बाहेक, प्रस्तुत महासन्धिका विभिन्न प्रावधानहरूका विरुद्ध गरिने सबै कार्यहरूलाई दमन गर्न आवश्यक कदम चाल्नेछ ।

सबै परिस्थितिहरूमा आरोपित व्यक्तिहरूलाई उचित अदालती कारबाही र प्रतिरक्षाको सुरक्षा प्रदान गरिने छ जुन धारा १०५ ले व्यवस्था गरेको र प्रस्तुत महासन्धिको अन्य धाराहरूमा उल्लेख भएको भन्दा कम अनुकूल हुनेछैन ।

## धारा १३०

पूर्ववर्ती धारासँग सम्बन्धित गम्भीर उल्लंघन भनेको, महासन्धिले संरक्षण गरेका व्यक्तिहरू वा सम्पत्ति विरुद्ध गरिएका निम्न कार्यहरू हुनेछन् । मनसायपूर्ण हत्या, यातना वा अमानवीय व्यवहार गर्नु, यसमा जैवीकिय प्रयोग, मनसायपूर्वक शरीर वा स्वास्थ्यलाई ठूलो कपट वा गम्भीर चोट पुऱ्याउनु, शत्रु शक्तिको सेनामा सेवा गर्न युद्धबन्दीलाई बाध्य बनाउनु वा प्रस्तुत महासन्धिले

निर्धारण गरेको स्वच्छ र नियमित अदालती कार्यवाहीको अधिकारबाट युद्धबन्दीलाई जानाजान बञ्चित गर्नु जस्ता कुरा पर्दछन् ।

## धारा १३१

पूर्ववर्ती धारामा निर्दिष्ट उल्लंघनहरूका सम्बन्धमा कुनै पनि उच्च संविदाकारी पक्षलाई निजले वा अरु कुनै उच्च संविदाकारी पक्षले व्यहोर्नुपर्ने कुनै दायित्वबाट आफूलाई वा अन्य उच्च संविदाकारी पक्षलाई उन्मुक्त गर्न अनुमति दिइनेछैन ।

## धारा १३२

युद्धरत पक्षको आग्रहमा यस महासन्धिको कुनै आरोपित उल्लंघनको सम्बन्धमा सरोकारवाला पक्षहरूका बीच, निर्णय भए बमोजिमको तरिकाद्वारा जाँचबुझको गठन गरिनेछ ।

यदि जाँचबुझको कार्यविधि सम्बन्धमा कुनै सहमति हुन सकेको रहेनछ भने पक्षहरू कुनै एक मध्यस्थको छनौटबारे सहमत हुनुपर्दछ जसले अनुशरण गर्नुपर्ने प्रक्रियाबारे निर्णय गर्नेछ ।

एकपटक उल्लंघन भएको कुरा स्थापित भएमा, युद्धरत पक्षहरूले यसलाई तुरुन्त अन्त्य गर्नेछन् र कम से कम विलम्ब गरी, यसको दमन गर्नेछन् ।

## खण्ड २
## अन्तिम प्रावधानहरू
## धारा १३३

प्रस्तुत महासन्धि अंग्रेजी र फ्रान्सेली भाषाहरूमा सम्पन्न भएको छ, दुबै मूलपाठहरू उत्तिकै आधिकारिक छन् ।

स्वीस संघीय परिषदले यस महासन्धिलाई रसियाली र स्पेनी भाषाहरूमा आधिकारिक रुपमा अनुवाद गर्ने व्यवस्था गर्नेछ ।

## धारा १३४

उच्च संविदाकारी पक्षहरू बीचको सम्बन्धमा प्रस्तुत महासन्धिले २७ जुलाई १९२९ को महासन्धिलाई खारेज गर्दछ ।

## धारा १३५

जमिनमाथि हुने लडाइँको कानुन र परम्परा सम्बन्धी २९ जुलाई, १८९९ वा १८ अक्टुबर, १९०७ को हेग महासन्धि अन्तर्गत बाँधिएका र प्रस्तुत महासन्धिका पक्ष भएका शक्तिहरूको बीचको

सम्बन्धमा यो अन्तिम महासन्धि माथि उल्लिखित हेग महासन्धिहरूसँग संलग्न नियमहरूको अध्याय २ को पूरक हुनेछ ।

## धारा १३६

प्रस्तुत महासन्धि, जसमा आजको मिति उल्लिखित छ, २१ अप्रिल, १९४९ मा जेनेभामा प्रारम्भ भएको सम्मेलनमा प्रतिनिधित्व गरेका शक्तिहरूको नाममा १५ फरवरी, १९५० सम्म, हस्ताक्षरका लागि खुला रहनेछ । यसका अतिरिक्त प्रस्तुत महासन्धि सम्मेलनमा प्रतिनिधित्व नगरेका शक्तिहरू तर २७ जुलाई, १९२९ को महासन्धिका पक्ष रहेका शक्तिहरूद्वारा समेत हस्ताक्षरको लागि खुला रहनेछ ।

## धारा १३७

प्रस्तुत महासन्धि जतिसक्दो चाँडो अनुमोदन गरिनेछ र यस्तो अनुमोदन तत्कालै वर्नमा जम्मा गरिनेछ ।

प्रत्येक अनुमोदनको लिखतको एउटा अभिलेख तयार गरिनेछ । स्वीस संघीय परिषदद्वारा यस अभिलेखको प्रमाणित प्रतिहरू महासन्धिमा हस्ताक्षर गर्ने सबै शक्तिहरूलाई वा जसको सम्मेलनसम्बन्धी सूचना प्राप्त भएको छ, ती शक्तिहरूलाई पठाइनेछ ।

## धारा १३८

कम्तिमा दुईवटा अनुमोदनका लिखतहरू दाखिला भएको ६ महिनापछि प्रस्तुत महासन्धि लागू हुनेछ ।

सो पश्चात प्रत्येक उच्च संविदाकारी पक्षको हकमा सो पक्षबाट अनुमोदनको लिखत दाखिला गरेको ६ महिनापछि प्रस्तुत महासन्धि लागू हुनेछ ।

## धारा १३९

प्रस्तुत महासन्धि लागू भएको मितिदेखि यसमा हस्ताक्षर नगरेका कुनै पनि शक्ति राष्ट्रको हकमा सम्मिलनका लागि खुला रहनेछ ।

## धारा १४०

सम्मिलनहरूबारे स्वीस संघीय परिषदलाई लिखित रुपमा सूचित गरिनेछ र सो प्राप्त भएको मितिले ६ महिनापछि लागू हुनेछन् । स्वीस संघीय परिषदले ती सबै शक्तिहरूलाई, जसको नाम

महासन्धिमा हस्ताक्षर भएको छ वा जसको सम्मिलनबारे सूचना प्राप्त भएको छ, नयाँ सम्मिलनको जानकारी गराउनेछ ।

## धारा १४१

धाराहरू २ र ३ मा उल्लिखित अवस्थाहरूले युद्ध वा कब्जा शुरु हुन अगाडि वा पछाडि संघर्षरत पक्षहरूद्वारा दाखिला गरिएको अनुमोदन वा सूचित गरिएको सम्मिलनलाई तत्काल प्रभावी बनाउनेछन् । संघर्षरत पक्षहरूबाट प्राप्त कुनै पनि अनुमोदन वा सम्मिलनबारे स्वीस संघीय परिषदले सर्वाधिक छिटो माध्यमद्वारा तुरुन्त जानकारी गराउनेछ ।

## धारा १४२

प्रत्येक उच्च संविदाकारी पक्षलाई वर्तमान महासन्धिलाई परित्याग गर्ने पूर्ण स्वतन्त्रता रहनेछ ।

स्वीस संघीय परिषदलाई यस्तो परित्यागबारे लिखित जानकारी दिनुपर्नेछ जसले सम्झौताका सबै पक्षका सरकारलाई जानकारी गराउनेछ ।

यस्तो परित्याग गरेको घोषणा स्वीस संघीय परिषदलाई जानकारी गराएको एक वर्षपछि प्रभावी हुनेछ । तर परित्याग गर्ने राष्ट्र संघर्षरत रहेको समयमा परित्यागको सूचना पठाएको भए, त्यस्तो परित्याग शान्ति कायम नभएसम्म र प्रस्तुत महासन्धिद्वारा संरक्षित व्यक्तिहरूको मुक्ति र स्वदेश फर्काउने कार्यसँग सम्बन्धित कार्यबाही पूरा नभएसम्म लागू हुनेछैन ।

परित्यागको प्रभाव केबल परित्याग गर्ने राष्ट्रको हकमा मात्र लागू हुनेछ । यसले कुनै पनि किसिमबाट अन्तर्राष्ट्रिय कानुनको सिद्धान्त अनुसार संघर्षरत पक्षहरूले पूरा गर्नुपर्ने दायित्वलाई कम गर्नेछैन, किनभने ती सभ्य मानिसहरूबीच स्थापित रीति रिवाज, मानवताका विधि र सार्वजनिक अन्तस्करणको चेतनाबाट निःसृत हुन्छन् ।

## धारा १४३

स्वीस संघीय परिषदले प्रस्तुत महासन्धिलाई संयुक्त राष्ट्र संघको संचिवालयमा दर्ता गर्नेछ । स्वीस संघीय परिषदले प्रस्तुत महासन्धिको सम्बन्धमा प्राप्त सबै अनुमोदन, सम्मिलिन र परित्यागहरूबारे, संयुक्त राष्ट्रसंघको सचिवालयलाई समेत जानकारी गराउनेछ ।

यसको साक्षीको रुपमा अधोहस्ताक्षरीहरूले आ-आफ्ना पूर्ण अधिकारपत्रहरू दाखिला गरेर वर्तमान महासन्धिमा हस्ताक्षर गरेकाछन् ।

१२ अगस्त, १९४९ का दिन जेनेभामा यसलाई अंग्रेजी र फ्रान्सेली भाषामा तयार गरियो । यसको मूल प्रति स्वीस महासंघको अभिलेखालयमा दाखिला गरिनेछ । स्वीस संघीय परिषदले यसको प्रमाणित प्रतिहरू प्रत्येक हस्ताक्षर कर्ता र सम्मिलनको राष्ट्रलाई प्रेषित गर्नेछ ।

## परिशिष्ट १

# घाइते र बिरामी युद्धबन्दीहरूलाई सोझै स्वदेश फिर्ता पठाउने तथा तटस्थ देशमा बसोबास गराउनेसम्बन्धी सम्झौताका नमुना

*(धारा ११० हेर्नुहोस्)*

## १. सोझै स्वदेश फिर्ता पठाउने तथा तटस्थ देशमा बसोबास गराउने सिद्धान्तहरू

### क. सोझै स्वदेश फिर्ता पठाउने

निम्न उल्लिखितहरूलाई सोझै स्वदेश पठाइनेछ :

(१) शारीरिक वा मानसिक आघातको परिणामस्वरुप निम्न प्रकारका अपाङ्गता भएका युद्धबन्दीहरू :

अंगको हानि भएको, पक्षघात, जोर्नीसम्बन्धी अथवा अन्य अपाङ्गता - यहाँ अपाङ्गता भन्नाले कम्तीमा एउटा हात अथवा गोडा नभएको अथवा एउटा हात अथवा गोडा नभएको सरहको हानि भएको भन्ने बुझ्नु पर्छ ।

अझ बढी उदार व्याख्याको प्रतिकूल नहुने गरी निम्न कुराहरूलाई एउटा हात अथवा गोडा नभएको सरहको भनी मान्नु पर्नेछ :

(क) एउटा हात वा सबै औंलाहरू वा एउटा हातको बूढी औंला र चोर औंला नभएको, एउटा गोडा वा एउटा गोडाका सबै औंलाहरू र पैतालाका हाडहरू नभएको ।

(ख) जोर्नी अरट्ठिएको स्थिति, हाडको कोशिकाहरूको हानि, घाउको खतको कारण सङ्कुचन हुँदा एउटा हातको जोर्नीहरू मध्ये एउटा ठूलो जोर्नीको अथवा सबै औंलाहरूको जोर्नीले काम गर्न अवरोध पुऱ्याएको ।

(ग) लामा हाडहरूको छद्म सन्धि बन्नु ।

(घ) चर्केको अथवा अन्य चोटपटकको कारणले अङ्गमा विकृति आउनु र यसले काम गर्न अथवा भार उठाउने शक्तिमा गम्भीर रुपमा बाधा पुऱ्याउनु ।

(२) घाइते भएको एक वर्षभित्र उपचार गर्दा पनि रोगको पूर्ण लक्षणअनुसार निको हुने जस्तो नदेखिएका जीर्ण अवस्थामा पुगेका सबै घाइते युद्धबन्दीहरू, उदाहरणार्थ, यस्तो स्थितिमा रहेकाहरू जस्तै :

(क) मुटुमा बाहिरबाट हानिएको वस्तु रहेको तर संयुक्त चिकित्सक आयोगले परीक्षणको बेलामा कुनै किसिमको गम्भीर विकृति पत्ता नलागेको ।

(ख) दिमागमा अथवा फोक्सोमा धातुका टुक्रा रहेको तर संयुक्त चिकित्सक आयोगले परीक्षणको बेलामा कुनै स्थानीय अथवा सामान्य प्रतिकृया पत्ता लगाउन नसकेको ।

(ग) हाडको कुनै भाग सुन्निएर रोग देखिनु- चोट लागेको एक वर्षसम्म पनि निको नहुने जस्तो देखिएको र जसको कारणले जोर्नी अरट्ठिनु अथवा अन्य क्षति हुँदा एउटा हात अथवा गोडा नभएको सरह मान्न सकिने ।

(घ) ठूलो जोर्नीमा प्वाल पर्नु र घाउमा पीप जम्नु ।

(ङ) खप्परमा चोट लाग्नु जसको कारणले हाडका कोशिकाहरूमा क्षति हुनु अथवा सर्नु ।

(च) अनुहारमा चोट लाग्नु अथवा जल्नु जसको कारणले कोशिकाहरूको क्षति र क्रियाशीलतामा क्षति हुनु ।

(छ) मेरुदण्डभित्र रहेका नसाहरूमा चोट लाग्नु ।

(ज) परिधिस्थ (Peripheral) स्नायुहरूमा चोट लाग्नाको परिणामस्वरुप एउटा हात अथवा एउटा गोडा नभएको सरह हुनु र निको हुन सो चोट लागेको दिनदेखि एक वर्षभन्दा बढी लाग्नु, उदाहरणको लागि जस्तैः पाखुरा अथवा कम्मरदेखि मेरुदण्डतिर जोड्ने तन्तुको जालमा चोट लाग्नु, नाडी र कुहिनादेखि औंलासम्मको अथवा घुँडा पछाडिको तेर्सो नसामा (नलीहाड तिरको नसा) र मध्यवर्ती घुँडा पछाडिको नसामा संयुक्त रुपमा चोट लाग्नु । नाडीको ( मांसपीशीय-कुण्डलित बक्राकार), कुहिनादेखि औंलासम्मको, तेर्सो अथवा मध्यवर्ती घुँडापछाडिको नसाहरूमा छुट्टै चोट लागेमा, जसको परिणामस्वरुप सङ्कुचन अथवा गम्भीर स्नायुतन्त्रसम्बन्धी बाधा उत्पन्न भएको स्थितिमा बाहेक स्वदेश फर्काउने औचित्य प्रमाणित हुनेछैन ।

(झ) मूत्र प्रणालीमा चोट लाग्नाको परिणामस्वरुप अक्षम तुल्याउनु ।

(३) सबै बिरामी युद्धबन्दीहरू जसको उपचार गर्दा पनि रोग लागेको एक वर्षभित्र पनि झन जीर्ण स्थितिमा रहेका र पूर्व लक्षण अनुसार निको नहुने जस्ता देखिएका, उदाहरणार्थ यस्तो स्थितिमा रहेकाहरू जस्तै :

(क) कुनै अङ्गको उत्तरोत्तर वृद्धि भएको क्षयरोग जसको उपचारको दृष्टिकोणले निको पार्न नसकिने अथवा तटस्थ देशमा उपचार गरेपछि कमसेकम निकै सुधार भएको ।

(ख) निःस्राव हुने फोक्सो सुन्निने रोग ।

(ग) क्षयरोगको रुपमा निदान नहुने स्वास प्रणालीसम्बन्धी अङ्गहरूमा लागेका निको नहुने भन्ने ठानिएका गम्भीर प्रकृतिको रोग : जस्तै- श्वास नलीमा सुजनसहित सुजनरहित गम्भीर रुपको फोक्सो सुन्निएको र मुटु दुर्बल भएको स्थिति, जीर्ण दमको रोग[1], जीर्ण श्वासनलीको सुजन[1] जसले एक वर्षभन्दा बढीसम्म असमर्थ तुल्याएको, श्वासनलीको भित्री भाग सुनिने रोग[1] इत्यादि ।

(घ) रक्त संचार पद्धतिमा गम्भीर जीर्ण प्रभाव परेको जस्तै हृदय झल्झमा चोट र हृदय पेशीमा सुजन[1] जसले रक्त संचार पद्धतिमा बाधा परेको लक्षण देखाएको यद्यपी संयुक्त चिकित्सा आयोगले जाँच्दा यस्तो लक्षण पत्ता लगाउन सकेको थिएन, साथै हृदयावरण र रक्तबाहिनीमा (बर्जर रोग, ठूलो धमनीको रोग, भिटामिन 'बी' को कमी भएर हुने स्नायु रोग), असर पारेको इत्यादि ।

(ङ) पाचनक्रियासम्बन्धी अङ्गहरूमा गम्भीर जीर्ण प्रभाव पर्नु : जस्तै- पेटको (आमाशयिक) रोग अथवा आन्द्राको पहिलो भागमा घाउ हुनु, यसको परिणामस्वरुप पेटको शल्यक्रिया गर्नु, जीर्ण आमाशयिक सुजन अथवा ठूलो आन्द्रा सुनिएर हुने रोग जुन रोगले एक वर्षभन्दा बढी समयदेखि असर पार्दैआएको कारणले सामान्य स्वास्थ्य स्थितिमा प्रभाव पारेको, कलेजोको एक प्रकारको रोग, जीर्ण पित्ताशयको रोग[1], इत्यादि ।

(च) जनेन्द्रिय तथा मूत्रीय अवयवसम्बन्धी अङ्गहरूमा गम्भीर जीर्ण असर पर्नु, जस्तै : मिर्गौलाको जीर्ण रोग परिणामस्वरुप विकृति उत्पन्न, मिर्गौलामा क्षयरोग

---

[1] संयुक्त चिकित्सक आयोगको निर्णय धेरै मात्रामा शिविरको चिकित्सक र युद्धबन्दीको जस्तै राष्ट्रियता भएको शल्य चिकित्सकले राखेको विवरण अथवा बन्दी तुल्याउने शक्तिको विशेषज्ञ चिकित्सकको जाँचमा आधारित हुनेछ ।

लागेकोले काटेर फाल्नु पर्ने, जीर्ण मिर्गौला र हुने ठाउँ सुनिने अथवा जीर्ण मूत्राशय सुनिने रोग, मिर्गौलामा पानी जम्ने अथवा मिर्गौलामा पीप जम्ने रोग, गम्भीर जीर्ण स्त्रीरोग सम्बन्धी परिस्थिति, सामान्य गर्भधारण र प्रसूतिसम्बन्धी विकृति, यस्ता रोगका कारणले तटस्थ देशमा बसोबास गराउन असम्भव हुने, इत्यादि ।

(छ) मध्यवर्ती तथा सीमावर्ती स्नायू प्रणालीसम्बन्धी गम्भीर जीर्ण रोग उदाहरण : सबै प्रत्यक्ष मनोविकृतिहरू र मनस्तापहरू जस्तै विकृति उत्तेजना, बन्देजको कारणबाट उत्पन्न गम्भीर मनस्ताप इत्यादि, यी सबै विशेषज्ञले प्रमाणित गरेका रोग हुन्[2], शिविरको चिकित्सकले प्रमाणित गरेका छारेरोग[2], धमनीको भित्री भाग बाक्लिएर हुने मस्तिष्कसम्बन्धी रोग, एक वर्षभन्दा बढिदेखि लागिरहेको स्नायुतन्त्रशोथ, इत्यादि ।

(ज) मस्तिकले सक्रिय रुपमा काम गर्न छाडेको गम्भीर जीर्ण रोग, यसमा मानसिक अथवा शारीरिक स्वास्थ्यतामा निकै कमी भएको कुरा तौल घटेको र दुर्बलता देखिएबाट बुझिने ।

(झ) दुबै अथवा एउटा आँखाको अन्धोपन, अर्को एक आँखाको दृश्य शक्ति सुधार गर्ने चश्मा लगाउँदा पनि १ भन्दा कम रहेको, एउटा आँखामा मात्र भए पनि आँखाको तीक्ष्णता सुधार गर्ने उपाय गर्दा पनि १/२ तीक्ष्णता पुऱ्याउन असम्भव भएको स्थिति, अन्य गम्भीर प्रकारका आँखाका रोग जस्तै : आँखाको चाप (ग्लुकोमा) रोग, आँखा नानीको वरिपरिको रङ्गीन भागमा लाग्ने रोग (इरिटिस), आँखामा रहने नसो जालोसम्बन्धी रोग (कोरोइडिटिस), आँखामा फुलो (ट्रकोमा) पर्ने ।

(ञ) श्रवणशक्तिमा विकृति जस्तै एकातर्फ पूर्ण बहिरोपन हुनु, एक मिटर टाढाबाट बोलेको सामान्य शब्द अर्को कानले सुन्न नसक्नु[2] ।

(ट) शरीरको कोशिका परिवर्तनमा गम्भीर प्रभाव, जस्तै इन्सुलिन दिएर उपचार गर्नुपर्ने मधुमेहको रोग ।

---

[2] संयुक्त चिकित्सक आयोगको निर्णय धेरै मात्रामा शिविरको चिकित्सक र युद्धबन्दीको जस्तै राष्ट्रियता भएको शल्य चिकित्सकले राखेको विवरण अथवा बन्दी तुल्याउने शक्तिको विशेषज्ञ चिकित्सकको जाँचमा आधारित हुनेछ ।

(ठ) शरीरभित्र तरल पदार्थ उत्पादन गर्ने ग्रन्थिमा गम्भीर प्रकारको विकृति, जस्तै : थाइरोइड ग्रन्थिबाट बढी हर्मोन निस्कने एक प्रकारको रोग, थाइरोइड ग्रन्थि कम सक्रिय हुन एडिसन्स रोग, शारीरिक क्षीणता, माँसपेशीसम्बन्धी रोग, इत्यादि ।

(ड) रक्त निर्माण गर्ने अङ्गमा गम्भीर र जीर्ण विकृति हुनु ।

(ढ) विषाक्तताको जीर्ण स्थिति, जस्तै : सिसाको विष लाग्नु, पारोको विष लाग्नु, मर्फिनको कुप्रभाव, कोकेनको कुप्रभाव, मद्यव्यसन, ग्यास अथवा विकिरणको विष लाग्नु, इत्यादि ।

(ण) क्रियाशिलतामा प्रत्यक्ष विकृति देखिने गरी गमनशक्तिमा जीर्ण प्रभाव, जस्तैः जोर्नीमा हुने सुजनबाट अङ्गहरूमा हुने बेरुपता, प्रारम्भिक तथा सहायक रुपमा बढ्दै जाने धेरै जोर्नीहरूमा हुने सुजन, चिकित्सकीय लक्षणसहितको बाथ रोग, इत्यादि ।

(त) छालासम्बन्धी गम्भीर जीर्ण रोगहरू, उपचार गर्दा पनि निको नहुने खालका ।

(थ) कुनै पनि किसिमको घातक (हानिकारक) वृद्धि ।

(द) गम्भीर जीर्ण सरुवा रोग- रोग लागेको एक वर्षसम्म पनि रहिरहेको, जस्तै अङ्गलाई हानि पुऱ्याउने, अङ्गहरूमा कमजोर पार्ने निर्णायक औलो रोग, गम्भीर विकृति पैदा गर्ने आउँ अथवा दण्डाकार जीवाणुबाट लाग्ने आमाबिसार रोग, उपचार गर्दा पनि नलाग्ने तेस्रो क्रमको शरीरभित्रका विभिन्न अङ्गमा आउने खटिरा, कुष्ठरोग, इत्यादि ।

(ध) गम्भीर प्रकृतिको भिटामिनको कमीबाट हुने रोग अथवा गम्भीर खाद्यको कमिबाट हुने रोग ।

## *ख. तटस्थ देशमा बसोबास*

निम्न उल्लेखित व्यक्तिहरू तटस्थ देशमा बसोबास गराउन योग्य हुनेछन् ।

(१) बन्दी अवस्थामा निको नहुने जस्ता देखिएका सबै घाइते युद्धबन्दीहरू, तर एउटा तटस्थ देशमा बसोबास गराउँदा निको हुन सक्ने अथवा जसको स्थितिमा निकै सुधार आउन सक्ने बन्दीहरू ।

(२) जुनसुकै अङ्गको क्षयरोग ग्रस्त भएको युद्धबन्दीलाई, बन्दी तुल्याउनुभन्दा अघि निको भएको प्रारम्भिक स्थितिको क्षयरोग बाहेक यदि तटस्थ देशमा उपचार भएको खण्डमा पूर्ण निको हुने अथवा कमसेकम राम्रै सुधार हुने आशा गरिएको बन्दी ।

(३) बन्दीमा बस्दाभन्दा श्वास प्रणाली, रक्त संचार, पाचनक्रिया, स्नायुसम्बन्धी संवेदनतन्त्रीय, जनेन्द्रिय तथा मूत्रीय, चर्म, गमनशक्ति आदि रोगबाट प्रभावित र उपचार आवश्यक पर्ने युद्धबन्दीहरूको यदि यस्ता रोगको उपचार बन्दी अवस्थामा बस्दा भन्दा तटस्थ देशमा गर्दा राम्रो परिणाम प्राप्त हुने भए ।

(४) युद्धबन्दी जसको बन्दीमा रहँदा नै मिर्गौलामा क्षयरोग बाहेकको अन्य मिर्गौलासम्बन्धी रोग लागेको कारण मिर्गौला काटेको, निको हुने क्रममा अथवा लुकेको अवस्थामा रहेको हाडको कुनै भाग सुन्निएर भएको रोग, इन्सुलिन उपचार गर्नु नपर्ने मधुमेहको रोग ग्रस्त बन्दीहरू ।

(५) युद्ध अथवा बन्दीको कारणले स्नायु विकार पीडित युद्धबन्दीहरू, बन्दीको कारणले स्नायु विकार पीडित बन्दी तटस्थ देशमा तीन महिना उपचार गर्दा पनि निको नभएमा अथवा त्यति अवधिको उपचार गर्दा पनि प्रष्ट रुपमा निको हुने जस्तो नदेखिएमा स्वदेश फिर्ता पठाइनेछ ।

(६) विषाक्तताबाट (ग्यास, धातु, क्षारतत्व इत्यादिबाट निश्चित) जीर्णरुपमा पीडित छन् र तटस्थ देशमा उपचार गर्दा निको हुने सम्भावना बढी भएका सबै युद्धबन्दीहरूलाई विशेष प्राथमिकता दिइनेछ ।

(७) गर्भवती अथवा काखे बालक र साना केटाकेटी भएका सबै महिला युद्धबन्दीहरू ।

निम्न स्थितिकाहरू भने तटस्थ देशमा बसोबास गराउन योग्य हुने छैनन् :

(१) उचित किसिमले प्रमाणित गरिएका सबै जीर्ण मनोविक्षिप्त व्यक्तिहरू ।

(२) निको नहुने भनि भनिएका सबै ऐन्द्रिक अथवा क्रियात्मक स्नायुसम्बन्धी रोगग्रस्त व्यक्तिहरू ।

(३) क्षयरोग बाहेक सो अवधिमा सञ्चारणीय सबै सर्ने रोगहरू भएको व्यक्तिहरू ।

२. सामान्य टिप्पणी

(१) उल्लिखित स्थितिहरूलाई सामान्यतया यथासम्भव व्यापक भावना राखी व्याख्या गर्ने र लागू गर्ने गर्नुपर्दछ ।

यस्तो उदार व्याख्याबाट युद्ध अथवा बन्दीको कारणबाट उत्पन्न भएको स्नायुसम्बन्धी र मानसिक स्थिति साथै जुनसुकै स्थितिको क्षयरोगी समेतलाई फाइदा पुऱ्याउँछ । थुप्रै घाउ चोट लागेको युद्धबन्दी तर सो घाउचोटको कारणले मात्र स्वदेश फिर्ता पठाउन योग्य नभएको, यस्तालाई पनि धेरै घाउचोटको कारणले मानसिक क्षति भएको कुरालाई ध्यानमा राखी समान भावना राखी जाँचिनेछ ।

(२) निर्विवादरुपमा स्वदेश फर्काउने अधिकार प्राप्त मामिलाहरू (अङ्ग छेदन, पूर्ण अन्धोपन अथवा बहिरोपन, फोक्सोको खुला क्षयरोग, मानसिक विकृति, घातक वृद्धि इत्यादि) शिविरका चिकित्सहरू अथवा बन्दी तुल्याउने देशले खटाएको सैनिक चिकित्सकीय आयोगले यथाशिघ्र जाँची स्वदेश फर्काउने काम गरिनेछ ।

(३) युद्ध हुनुभन्दा अघि नै लागेका घाउ र रोग जुन बिग्रँदै गएको छैन र युद्धमा भएको घाउचोटले पछि सैनिक सेवा गर्न बाधा पुऱ्याएको छैन भने यस्ता व्यक्ति सोझै स्वदेश फिर्ता पठाउन योग्य हुनेछैनन् ।

(४) यो अनुसूचीको सबै प्रावधानहरूलाई संघर्षका पक्ष भएका सबै देशमा समानरुपमा व्याख्या गर्ने र लागू गरिनेछ । सम्बन्धित शक्तिहरू र अधिकारीहरूले संयुक्त चिकित्सक आयोगहरूलाई आफ्नो कार्य पूरा गर्न आवश्यक सबै किसिमका सुविधाहरू प्रदान गर्नेछ ।

(५) माथि (१) मा (सोझै स्वदेश फर्काउने सिद्धान्त शीर्षक अन्तर्गत) दिइएका उदाहरणहरू विशिष्ट खालका हुन् । यी प्रावधानहरूसँग निश्चितरुपमा मिल्न नआएको अवस्थाका मामिलाहरूलाई पनि प्रस्तुत महासन्धिको धारा ११० मा भएका व्यवस्थाको भावना र यो सम्झौतामा प्रतिपादन गरिएको सिद्धान्तहरू अनुकुल निर्धारण गरिनेछ ।

## परिशिष्ट २

## संयुक्त चिकित्सक आयोगहरूसम्बन्धी नियमहरू

*(धारा ११२ हेर्नुहोस्)*

### धारा १

प्रस्तुत महासन्धिको धारा ११२ मा व्यवस्था गरिएको संयुक्त चिकित्सा आयोगहरूमा ३ जना सदस्यहरू रहनेछन्, यसमध्ये दुई जना तटस्थ देशका हुनेछन् र तेस्रो सदस्य बन्दी तुल्याउने शक्तिले मनोनित गर्नेछ । तटस्थ सदस्यहरूमध्ये एक जनाले अध्यक्षता गर्नेछ ।

## धारा २

दुईजना तटस्थ सदस्यहरू संरक्षक शक्तिको सहमतिमा बन्दी तुल्याउने शक्तिको अनुरोधमा रेडक्रसको अन्तर्राष्ट्रिय समितिले मनोनित गर्नेछ । तिनीहरू आफ्नै देशमा, कुनै तटस्थ देशमा अथवा बन्दी तुल्याउने शक्तिको भू-भागमा निवास गरिरहेका हुन सक्नेछन् ।

## धारा ३

यस्ता तटस्थ सदस्यहरू सम्बन्धित युद्धका पक्षहरूले समर्थन गरेको हुनुपर्नेछ र यिनीहरूले आफ्नो स्वीकृति रेडक्रसको अन्तर्राष्ट्रिय समिति र संरक्षक शक्तिलाई सूचना गर्नेछन । यस्तो सूचना दिएपछि मात्र यस्ता तटस्थ सदस्यहरू प्रभावकारी रुपमा मनोनित भएको मानिनेछन् ।

## धारा ४

आवश्यक परेको बेलामा नियमित सदस्यहरूलाई प्रतिस्थापित गर्न यथेष्ट संख्यामा उपसदस्यहरू पनि मनोनित गरिनेछन् । तिनीहरू पनि नियमित सदस्यहरू मनोनित गरेकै बेलामा अथवा कमसेकम यथाशिघ्र मनोनित गरिनेछन् ।

## धारा ५

यदि कुनै कारणले रेडक्रसको अन्तर्राष्ट्रिय समितिले तटस्थ सदस्यहरूको मनोनयन गर्ने व्यवस्था मिलाउन नसकेमा, यो काम जाँचिनु पर्ने युद्धबन्दीहरूको स्वास्थ्य संरक्षण गर्ने शक्तिले गर्नेछ ।

## धारा ६

दुई जना तटस्थ सदस्यहरू, सम्भव भएसम्म एकजना शल्यचिकित्सक र अर्को चिकित्सक हुनेछ ।

## धारा ७

तटस्थ सदस्यहरू संघर्षका पक्षहरूबाट पूर्णतया स्वतन्त्र हुनेछन् र जसले यिनीहरूलाई आफ्नो कर्तव्य पूरा गर्न सबै किसिमको सुविधाहरू प्रदान गर्नेछन् ।

## धारा ८

यी नियमहरूको धारा २ र ४ मा व्यवस्था भएअनुसार बन्दी बनाउने शक्तिको सहमतिमा रेडक्रसको अन्तर्राष्ट्रिय समितिले मनोनयन गर्दा यस्ता मनोनित व्यक्तिहरूको सेवाका शर्तहरू निर्धारण गर्नेछ ।

## धारा ९

संयुक्त चिकित्सक आयोगहरूले तटस्थ सदस्यहरूको स्वीकृति हुनासाथ यथाशिघ्र आफ्ना काम प्रारम्भ गर्नेछन् र कम्तीमा पनि यस्तो स्वीकृति भएको तीन महिनाभित्र काम प्रारम्भ गर्नेछन् ।

## धारा १०

यी संयुक्त चिकित्सक आयोगहरूले प्रस्तुत महासन्धिको धारा ११३ ले व्यवस्था गरेका सबै बन्दीहरूको जाँच गर्नेछ । यिनीहरूले स्वदेश फर्काउने, अस्वीकार गर्ने अथवा पछि जाँच गर्ने भनि प्रस्ताव गर्नेछन् । यिनीहरूले बहुमतका आधारमा निर्णय गर्नेछन् ।

## धारा ११

यी संयुक्त चिकित्सक आयोगहरूले प्रत्येक निश्चित मामिलाको सम्बन्धमा गरेका निर्णयको जानकारी उनीहरूले जाँचेको पछिको महिनाको अवधिमा बन्दी तुल्याउने शक्ति, संरक्षक शक्ति र रेडक्रसको अन्तर्राष्ट्रिय समितिलाई दिइनेछ । यी संघमा चिकित्सक आयोगहरूले आफूले जाँचेको प्रत्येक युद्धबन्दीसम्बन्धी निर्णय निजलाई पनि जानकारी दिइने छ र जसलाई स्वदेश फिर्ता पठाउन प्रस्ताव गरेका छन् त्यस्तालाई प्रस्तुत महासन्धिको अनुसूचीमा दिइएको नमूनाअनुसारको प्रमाणपत्र प्रदान गर्नेछ ।

## धारा १२

बन्दी बनाउने शक्तिले संयुक्त चिकित्सक आयोगहरूबाट निर्णयसम्बन्धी आधिकारीक जानकारी पाएको ३ महिनाभित्र यस्ता निर्णयहरूको कार्यान्वयन गर्नुपर्नेछ ।

## धारा १३

यदि संयुक्त चिकित्सक आयोगको सेवाको आवश्यक पर्ने देशमा तटस्थ चिकित्सक उपलब्ध नभएमा र कुनै कारणबस अर्को देशमा बसोबास गरिरहेको तटस्थ चिकित्सक मनोनित गर्न असम्भव भएको स्थितिमा, संरक्षक शक्तिको सहमतिमा बन्दी तुल्याउने शक्तिले यो नियमको धाराहरू १, २, ३, ४, ५ र ८ मा गरिएका प्रावधानहरूको अधिनमा रही, संयुक्त चिकित्सक आयोगले पालन गर्ने काम कर्तव्य सरहको काम कर्तव्यहरू गर्ने गरी एउटा चिकित्सक आयोग गठन गर्न सक्नेछ ।

## धारा १४

संयुक्त चिकित्सक आयोगहरू स्थायी रुपमा काम गर्नेछन् र प्रत्येक शिविरमा ६ महिनामा नबढाई एक पटक जानेछन् ।

## परिशिष्ट ३

# सामूहिक सहायता कार्यसम्बन्धी नियमहरू

*(धारा ७३ हेर्नुहोस्)*

## धारा १

बन्दीहरूका प्रतिनिधिहरूलाई उनीहरू जिम्मेवार रहेको सामूहिक सहायता सामग्री (वस्तु) हरू उनीहरूको शिविरले व्यवस्था गरेका सबै युद्धबन्दीहरूलाई वितरण गर्न स्वीकृति दिइनेछ, यस्तो वितरण गर्दा अस्पतालमा बसेका र कुनै काराबासमा सजायँ भोगिरहेका बन्दीहरूलाई समावेश गर्नुपर्नेछ ।

## धारा २

सामूहिक सहायताका वस्तुहरूको वितरण दाताहरूको निर्देशन र बन्दीहरूको प्रतिनिधिहरूले बनाएको योजना अनुसार हुनेछ । औषधिको भण्डारको प्रयोगको सम्बन्धमा भने वरिष्ठ चिकित्सक अधिकारीहरूसँग भएको सम्झौतामा भएको प्राथमिकताको आधारमा र अस्पताल र जीर्ण रोगीको स्याहार सुसार गर्ने अशक्तालयमा रहेका बिरामीहरूको आवश्यकता पूर्ति गर्न भएको मागको आधारमा दाताको निर्देशनलाई पन्छ्याउन सकिनेछ । यसरी परिभाषित सीमाहरू भित्र बसेर गरिने वितरण सदैव समानतापूर्वक गरिनेछ ।

## धारा ३

बन्दीहरूका प्रतिनिधिहरू अथवा उनीहरूका सहयोगीहरूलाई प्राप्त वस्तुहरूको गुणस्तर र परिमाण प्रमाणित गरी हेर्न र दाताहरूलाई पठाउन त्यसको विस्तृत प्रतिवेदन तयार गर्न समर्थ तुल्याउनको निम्ति सहायताका वस्तुहरू प्राप्त हुने शिविरको नजिकैको स्थलसम्म जान स्वीकृति दिइनेछ ।

## धारा ४

बन्दीहरूका प्रतिनिधिहरूलाई सामूहिक सहायताका वस्तुहरूको वितरण शिविरका शाखा शिविरहरू तथा जोडिएका शिविरहरूमा उनीहरूको निर्देशन अनुसार भएका छन् कि छैनन् भन्ने कुरा जाँची हेर्न आवश्यक सुविधा प्रदान गरिनेछ ।

## धारा ५

बन्दीहरूका प्रतिनिधिहरू र यस्ता प्रतिनिधिहरूका श्रमिक दल अथवा अस्पतालहरू तथा अशक्तालयका वरिष्ठ चिकित्सक अधिकारीहरूलाई दाताहरूको प्रयोजनको लागि सामूहिक सहायताका वस्तुहरूसँग सम्बन्धित (वितरण, आवश्यकता, परिमाण इत्यादि) फर्म वा प्रश्नावली पत्र भर्न स्वीकृति दिइनेछ । राम्रोसँग भरिएका यस्ता फर्महरू र प्रश्नावीहरू दाताहरूलाई अविलम्ब पठाइनेछ ।

## धारा ६

युद्धबन्दीहरूलाई सामूहिक सहायताका वस्तुहरू शिविरमा नियमितरुपमा उपलब्ध गराइरहन र नयाँ आउने बन्दीहरूको समूहको निम्ति आवश्यक पर्ने सामूहिक सहायताका वस्तुहरूको यथेष्ट मात्रामा मौज्दात राख्नको निम्ति बन्दीका प्रतिनिधिहरूलाई स्वीकृति दिइनेछ । यस प्रयोजनको निम्ति उनीहरूको मातहतमा उपयुक्त भण्डारगृह रहनेछ, प्रत्येक भण्डारगृहको निम्ति दुईटा ताल्चा उपलब्ध गराइनेछ- त्यसमध्ये एउटा ताल्चाको साँचो शिविरको समादेशकसँग रहनेछ ।

## धारा ७

लुगाफाटोको सामूहिक खेप प्राप्त भएको बेलामा प्रत्येक युद्धबन्दीले कम्तीमा पूरा एकजोर लुगा आफूसँग राख्न सक्नेछ । यदि कुनै बन्दीसँग पूरा एकजोर भन्दा बढी भएमा सबभन्दा बढी संख्यामा लुगा भएकाबाट फिर्ता लिन अथवा कम लुगा भएकालाई दिन आवश्यक भएमा त्यस्ता बढी भएकाबाट बढी भएका लुगामध्येबाट खास एक थोक मात्र पनि फिर्ता लिन बन्दीका प्रतिनिधिलाई स्वीकृति दिइनेछ । यसरी फिर्ता लिँदा केही पनि नभएकाले दिनुपर्ने स्थितिमा बाहेक, भित्र लगाउने लुगा, मोजा अथवा जुत्ताको दोस्रो जोडी फिर्ता लिइने छैन ।

## धारा ८

उच्च संविदाकारी पक्षहरू, विशेष गरी बन्दी बनाउने शक्तिहरूले यथासम्भव सर्वसाधारण जनतालाई आपूर्ति गर्ने नियमहरूको अधिनमा रहने गरी, युद्धबन्दीहरूलाई सामूहिक सहायताका वस्तुहरू वितरण गर्ने प्रयोजनका लागि उनीहरूको भू-भागमा बनेका वस्तुहरू खरिद गर्न अधिकार दिनेछन् । त्यस्तै प्रकारले यस्तो खरिद व्यवस्था गर्नको निम्ति आवश्यक रकम उनीहरूले हस्तान्तरण गर्न र अन्य प्राविधिक तथा प्रशासनिक प्रकृतिका व्यवस्था गर्न आवश्यक सुविधा पुऱ्याउने छन् ।

## धारा ९

माथि उल्लिखित प्रावधानहरू युद्धबन्दीहरूले शिविरमा आई पुग्नुभन्दा अघि अथवा स्थानान्तरण भइरहेका क्रममा सामूहिक सहायताका वस्तुहरू पाउनुपर्ने उनीहरूको अधिकारमा बाधाको रुपमा रहनेछैन, यस्तै यी प्रावधानहरू संरक्षक शक्तिका प्रतिनिधिहरू, रेडक्रसको अन्तर्राष्ट्रिय समिति अथवा यस्ता वस्तुहरू पठाउन जिम्मेवार इकाई र अन्य कुनै माध्यमबाट बन्दीहरूलाई वस्तुहरू वितरण गर्न सुनिश्चित गर्ने इकाई र बन्दीहरूलाई सहायता गर्ने कुनै अन्य संस्थाको निम्ति पनि बाधाको रुपमा रहने छैन ।

# परिशिष्ट ४

## क. परिचय-पत्र

### (धारा ४ हेर्नुहोस्)

सूचना

......................

यो परिचय-पत्र सशस्त्र सेनासँगै जाने व्यक्तिको नाममा जारी गरिएकोछ, जो सेनाको अङ्गको रुपमा रहने छैन । यो पत्र जसको नाममा जारी भएको छ निजले हरेक समयमा आफूसँगै राख्नुपर्नेछ । यदि यो पत्र बोक्नेलाई बन्दी बनाइएमा उसले तुरुन्तै आफ्नो परिचय कायम गर्न सहयोग पुऱ्याउनको निम्ति बन्दी बनाउने अधिकारी समक्ष प्रस्तुत गर्नुपर्नेछ ।

औंलाको छाप (ऐच्छिक)

दाहिने चोर औंला

देब्रे चोर औंला

परिचयका अन्य कुनै चिन्हहरू

| कार्यालयको छाप | धर्म |
|---|---|
| | रक्त समूह |

| कपाल | | | आँखाहरू | वजन | उचाइ |
|---|---|---|---|---|---|

---

(परिचय-पत्र दिने देश र सैनिक अधिकारीको नाम)

परिचय-पत्र

सशस्त्र सेनासँगै जाने व्यक्तिको निम्ति

परिचय-पत्र वालाको तस्वीर

नाम : ............................................

पहिलो नाम : ..........................................

जन्ममिति र स्थान : .....................................

सशस्त्र सेनासँगै जाने हैसियन : ........................

जारी गरेको मिति :

बाहकको सही

**टिप्पणी** : यो पत्र प्राथमिकताको रुपमा दुई अथवा तीन भाषामा बनाउनु पर्नेछ । यी भाषामध्ये एउटा अन्तर्राष्ट्रिय रुपमा प्रयोग हुने भाषा हुनुपर्दछ । पत्रको निश्चित आकार १३×१० सेन्टिमिटरको हुनेछ । यी माध्यमको डट लागेको ठाउँमा पट्याउन हुने खालको हुनेछ ।

# परिशिष्ट ४

## ख. बन्दी बनाएको पत्र

*(धारा ७० हेर्नुहोस्)*

१. अगाडिको भाग

| युद्धबन्दीको हुलाक पत्र | हुलाक दस्तु नलाग्ने |
|---|---|
| युद्धबन्दीको निम्ति बन्दी विवरण पत्र | |
| **अत्यन्त महत्वपूर्ण**<br><br>यो पत्र प्रत्येक बन्दीले आफू बन्दी बनाइना साथ तुरुन्त भर्नुपर्छ र बन्दीको ठेगाना (स्थानान्तरण अर्को शिविरमा अथवा अस्पतालमा सरेको कारणले) बदलिएमा पनि भर्नुपर्छ ।<br><br>यो पत्र बन्दीले आफ्ना परिवारलाई पठाउने स्वीकृत पत्रभन्दा बिल्कुल फरक किसिमको हो । | केन्द्रीय युद्धबन्दीहरूको संस्था रेडक्रसको अन्तर्राष्ट्रिय समिति<br><br>जेनेभा<br><br>..................<br><br>स्विटजरल्याण्ड |

२. पछाडिको भाग

| | | |
|---|---|---|
| पढ्न सकिने गरी<br>ठूलो अक्षरमा लेख्ने | | १. बन्दी आश्रित रहेको व्यक्ति |
| २. नाम : | ३. पहिलो नाम : | ४. पिताको नाम : |
| ५. जन्ममिति : ........................... ६. जन्मस्थान : ................................. | | |
| ७. पद : ........................................................................................ | | |
| ८. सेवा नम्बर : ........................................................................... | | |
| ९. नजिकको नातेदारको ठेगाना : ............................................................. | | |
| *१०. बन्दी बनाएको मिति : (अथवा) | | |

| |
|---|
| आएको (शिविर नं., अस्पताल इत्यादि) ………………………………………… |
| *११. (क) राम्रो स्वास्थ्य ……………………… (ख) घाइते नभएको …………………<br>(ग) निको भएको ………………………<br>(घ) आराम गरिरहेको ………………… (ङ) बिरामी …………………………<br>(च) केही घाइते भएको ………………… (छ) गम्भीर घाइते …………………… |
| १२. मेरो वर्तमान ठेगाना : बन्दी नं. ……………………………………………………<br>शिविरको नाम : ………………………………………………………………<br>१३. मिति : ………………………………… १४. हस्ताक्षर ………………………… |
| *लागू नहुने कुरा झिक्ने – नयाँ कुरा नथप्नु होला<br>पछाडिको व्याख्या हेर्नुहोला |

टिप्पणी : यो फर्म दुई वा तीन भाषामा बनाउनुपर्छ र विशेष गरी बन्दीको आफ्नै भाषा र बन्दी बनाउने शक्तिको भाषा। निश्चित आकार १५×१०.५ सेन्टिमिटर हुनेछ।

## परिशिष्ट ४

## ग. पत्राचार पत्र र चिठ्ठी पत्र

*(धारा ७१ हेर्नुहोस्)*

## १. हुलाक पत्र

१. कार्ड

१. अगाडीको भाग

| | |
|---|---|
| युद्धबन्दी हुलाक<br><br>हुलाक पत्र | हुलाक दस्तुर नलाग्ने<br><br>प्राप्त कर्ता : ................... |
| पठाउने :<br><br>नाम र पहिलो नाम : .................................<br><br>जन्म मिति र स्थानः ...................................<br><br>युद्धबन्दी नं. : ...........................................<br><br>शिविरको नाम : ........................................<br><br>खटाइएको देश : ........................................ | .......................................................<br><br>.......................................................<br><br>पुग्ने स्थान : ...................................<br><br>सडकको नाम : ..............................<br><br>देश : ............................................<br><br>प्रान्त अथवा विभाग : .......................... |

२. पछाडिको भाग

| |
|---|
| शिविरको नाम : ...................................................... मिति : ................................ |
| ......................................................................................................................... |
| ......................................................................................................................... |
| ......................................................................................................................... |
| ......................................................................................................................... |
| ......................................................................................................................... |
| ......................................................................................................................... |
| सकेसम्म बुझिने गरी दिइएको धर्कामा लेख्नुहोला । |

टिप्पणी : यो पत्र दुई वा तीन भाषामा बनाउनुपर्छ र खासगरी बन्दीको आफ्नै भाषामा र बन्दी बनाउने शक्तिको भाषामा । यो फर्मको निश्चित आकार १५×१० सेन्टिमिटर हुनेछ ।

## परिशिष्ट ४

## ग. पत्राचार पत्र र चिठ्ठी पत्र

*(धारा ७१ हेर्नुहोस्)*

**२. चिठ्ठी पत्र**

युद्धबन्दी हुलाक

हुलाक दस्तुर नलाग्ने

पत्र पाउने ..............................................................................................

..............................................................................................

स्थान : ..............................................................

सडक नं.: ..............................................................

देश : ..............................................................

विभाग अथवा प्राप्त : ........................................

---

पठाउने : ..............................................................................................

नाम र पहिलो नाम : ..............................................................................

जन्म मिति र स्थान : ..............................................................................

युद्धबन्दी नं. : ..............................................................................

शिविरको नाम : ..............................................................................

चिठ्ठी खसालेको देश : ..............................................................................

*************

टिप्पणी : यो फर्म दुई वा तीन भाषामा बनाउनुपर्छ, विशेष गरी बन्दीको भाषामा र बन्दी तुल्याउने शक्तिको भाषामा बीचको धर्का भएको ठाउँमा पत्रलाई मोडेर पत्रको चुच्चो पारेको टुप्पोलाई ताराको चिन्ह लागेको ठाउँमा काटिएको भागमा छिराउने र यसबाट खामको आकारमा आउँछ । यो फर्मको अर्कोपट्टि अनुसूची ग१ मा दिइएको नमूना हुलाक पत्रमा जस्तै धर्काहरू दिइएका छन् । यसमा २५० जति शब्दहरू अटाउँछन् र बन्दीहरूले यसमा लेख्न सक्छन् । यो फर्मको निश्चित आकार २९×१५ सेन्टिमिटर छ ।

## परिशिष्ट ४

# घ. मृत्युको सूचना

*(धारा १२० हेर्नुहोस्)*

| | |
|---|---|
| जिम्मेवार अधिकारीको पद : | मृत्युको सूचना |
| | बन्दी आश्रित शक्ति ……………………………… |
| नाम र पहिलो नाम : ……………………………………………………………… | |
| पिताको पहिलो नाम : | ……………………………………… |
| जन्म मिति र स्थान : | ……………………………………… |
| मृत्यु भएको स्थान : | ……………………………………… |
| पद र सेवा नं. (परिचय पत्रमा दिएअनुसार) | ……………………………………… |
| नजिकको नातेदारको नाम : | ……………………………………… |
| कहाँ र कहिले बन्दी तुल्याएका | ……………………………………… |
| मृत्युको कारण र वातावरण | ……………………………………… |
| गाडेको स्थान | ……………………………………… |
| चिहानमा चिन्ह लगाएको छ कि छैन र पछि परिवारले पत्ता लगाउन सक्छ कि सक्दैन ? | ……………………………………… ……………………………………… |
| मृतकको व्यक्तिगत वस्तुहरू बन्दी बनाउने शक्तिसँग रहेका छन् अथवा यो सूचनासँगै फिर्ता पठाइएको छन् ? | ……………………………………… ……………………………………… |
| मृतक बिरामी भएको बेलामा अथवा अन्तिम घडीमा हेरचाह गर्ने व्यक्तिको (डाक्टर, नर्स, धार्मिक गुरु सहबन्दी) यहाँ अथवा नत्थी गरिएको कागजमा मृत्युको वातावरण तथा गाड्दाको छोटो विवरण दिन सक्छ कि ? | ……………………………………… ……………………………………… ……………………………………… |
| (जिम्मेवार अधिकारीको सही) | (दुई जना साक्षीको सही र छाप) |
| ……………………………………… | ……………………………………… |

टिप्पणी : यो फर्म दुई अथवा तीन भाषामा बनाउनुपर्छ, विशेष गरी युद्धबन्दी र बन्दी तुल्याउने शक्तिको भाषामा । यसको निश्चित आकार २१×३० सेन्टिमिटर हुनेछ ।

# परिशिष्ट ४

## ङ. स्वदेश फिर्ता प्रमाण-पत्र

*(परिशिष्ट २, धारा ११ हेर्नुहोस्)*

## स्वदेश फिर्ता प्रमाण-पत्र

मिति :

शिविर :

अस्पताल :

थर (नाम) :

प्रथम नाम :

जन्म मिति :

पद :

सेनाको नम्बर :

युद्धबन्दी नम्बर :

घाउ-रोग :

आयोगको निर्णय :

अध्यक्ष

संयुक्त चिकित्सक आयोग

क = सोझै स्वदेश फर्काउने ।

ख = तटस्थ देशमा बसोबास गराउने ।

अआ = अर्को आयोगले पुनः जाँच गर्ने ।

## परिशिष्ट ५
## बन्दीहरूले आफ्नो देशमा पठाउने रकमसम्बन्धी नियमहरूको नमूना
*(धारा ६३ हेर्नुहोस्)*

(१) धारा ६३ को तेस्रो अनुच्छेदमा उल्लेख भएको सूचनामा निम्न कुराहरू दर्शाइने छ :

(क) धारा १७ मा उल्लेख भएको संख्या, पद, रकम पठाउने युद्धबन्दीको थर र पहिलो नाम,

(ख) रकम पाउनेको देशमा निजको नाम र ठेगाना,

(ग) बन्दी बनाउने देशको मुद्रा भुक्तानी पठाउने कूल रकम ।

(२) यस्तो सूचनामा युद्धबन्दीको हस्ताक्षर रहनेछ अथवा यदि उसले लेख्न नसक्ने भएमा साक्षीको उपस्थितिमा निजले चिन्ह लगाउनेछ र यसमा बन्दीहरूको प्रतिनिधिले प्रतिहस्ताक्षर गर्नेछ ।

(३) शिविरका समादेशकले यस सूचनामा एउटा प्रमाणपत्र समावेश गर्नेछ जसमा युद्धबन्दीले पठाउन चाहेको रकमभन्दा कम मौज्दात नभएको प्रमाणित गर्नेछ ।

(४) यस्तो सूचना फाँटवारीहरूको पनि बन्न सक्छ, यस्तो फाँटवारीको प्रत्येक पानामा बन्दीहरूको प्रतिनिधि साक्षीको रुपमा रहेको हुन्छ र शिविरका समादेशकले प्रमाणित गरेको हुन्छ ।